


राष्ट्रिय अपाङ्ग महासंघ, नेपालको मुखपत्र

www.nfdn.org.np

# रूपान्तरण

REFORMATION

चौमासिक

# अपाङ्गता भएका महिलाको दक्षिण एसियाली सम्मेलन

- अपाङ्गता र अधिकार
  - हुमकला पाण्डे
- हाम्रा उपलब्धि, प्रयास र भविष्यको बाटो
  - सुदर्शन सुवेदी

अपाङ्गता भएका व्यक्तिका अधिकारसम्बन्धमा सर्वोच्च अदालतको परमादेश

# सूचना ! सूचना !! सूचना !!!

## संस्था नवीकरणसम्बन्धी सार्वजनिक सूचना

राष्ट्रिय अपाङ्ग महासंघ-नेपालको केन्द्रीय कार्यसमितिको १२औँ पूर्ण बैठकको निर्णय अनुसार २०७१ साल आसोज ३ र ४ गते पन्ध्रौँ साधारणसभा गर्ने निर्णय भएको जानकारी गराउँछौँ ।

महासंघको पन्ध्रौँ साधारणसभामा भाग लिन कम्तीमा आर्थिक वर्ष २०६९/०७० सम्म आफ्नो सम्बन्धित जिल्लाको जिल्ला प्रशासन कार्यालयमा संस्था नवीकरण गरिसकेको र महासंघको विधान अनुसार महासंघमा कम्तीमा आर्थिक वर्ष २०७०/०७१ सम्मको सदस्यता नवीकरण गरिसकेको हुनुपर्ने भएको हुनाले माथि उल्लेखित मितिसम्म जि.प्र.का.मा दर्ता नवीकरण भइसकेका संस्थाहरूले आगामी २०७१ साल भदौ १५ गतेसम्ममा महासंघको क्षेत्रीय कार्यालय वा केन्द्रीय कार्यालयमार्फत महासंघमा सदस्यता नवीकरण गराउन यस महासंघमा आवद्ध सबै सदस्य संस्थाहरूमा यो सूचना जारी गरिन्छ ।

**(सुदर्शन सुवेदी)**
**अध्यक्ष**
**राष्ट्रिय अपाङ्ग महासंघ नेपाल**

**(टीका दाहाल)**
**महासचिव**
**राष्ट्रिय अपाङ्ग महासंघ नेपाल**

---

श्री राष्ट्रिय अपाङ्ग महासंघका सदस्य संस्था

### विषय : संस्था नवीकरण सम्बन्धमा ।

सर्वप्रथम राष्ट्रिय अपाङ्ग महासंघ-नेपालको केन्द्रीय कार्यसमितिको १२औँ पूर्ण बैठकको निर्णय अनुसार २०७१ साल असोज ३ र ४ गते पन्ध्रौँ साधारणसभा गर्ने निर्णय भएको कुरा सम्पूर्ण सदस्य संस्थाहरूलाई सहर्ष जानकारी गराइन्छ ।

प्रस्तुत विषयमा राष्ट्रिय अपाङ्ग महासंघ नेपालको विधान अनुसार उक्त साधारणसभामा भाग लिन लागि महासंघमा आर्थिक वर्ष २०७०/०७१ सम्म सदस्यता नवीकरण गराइसक्नुपर्ने भएकाले आगामी २०७१ साल भदौ १५ गतेभित्र नवीकरण गराइसक्नुहुन हार्दिक अनुरोध छ ।

विधान अनुसार नवीकरण गर्दा आवश्यक पर्ने कागजातसमेत उपलब्ध गराउनुहुन पनि अनुरोध गरिन्छ ।

**(सुदर्शन सुवेदी)**
**अध्यक्ष**
**राष्ट्रिय अपाङ्ग महासंघ नेपाल**

१४ साउन, २०७१




# अपाङ्गता र अधिकार

**हुमकला पाण्डे** पृष्ठ ३



पृष्ठ ८

## अपाङ्गता भएका महिलाको

# दक्षिण एसियाली प्रथम सम्मेलन



# हाम्रा उपलब्धि, प्रयास र भाविष्यको बाटो

सुदर्शन सुवेदी/पृष्ठ १३




**रूपान्तरण चौमासिक**
**वर्ष १८, अंक ३ असार २०७१**
**राष्ट्रिय अपाङ्ग महासङ्घ, नेपालको मुखपत्र**

सल्लाहकार : **सुदर्शन सुवेदी**
सम्पादन समूह : **टीकादेवी दाहाल, मुकुन्दहरि दाहाल, मनिष प्रसाई, धातृप्रसाद सुवेदी**
व्यवस्थापन : **ध्रुवहरि न्यौपाने, सीता बराल, महादेव भारती**
आवरण/लेआउट : **अल मिडिया सोलुसन, बागबजार (४२५३९६४)**
प्रकाशक : **राष्ट्रिय अपाङ्ग महासङ्घ-नेपाल, सूचना तथा सञ्चार समन्वय विभाग**
कार्यालय : **भृकुटीमण्डप, काठमाडौँ**
फोन : ४२३११५९, फ्याक्स : ४२२९५२२, पोष्ट बक्स नं. : ९१८८
इमेल : shudarsons@gmail.com वेबसाइट : www.nfdn.org.np
मुद्रक : **भोजपुर सिद्धकाली प्रिन्टिङ प्रेस**
सुकेधारा, काठमाडौँ (४३७६३९८)

# नयाँ संविधानमा अपाङ्गता भएका व्यक्तिका सवाल

संविधान राष्ट्रको मूल कानुन हो, जसले हरेक राष्ट्रको शासन व्यवस्थासँगै सिंगो राष्ट्रको सिमाना र संरचनासहितको संचालन प्रक्रियालाई निर्देशन गर्दछ । त्यसैले संविधानलाई हरेक राष्ट्रले आफ्नो सर्वोच्च कानूनको रूपमा मानेको हुन्छ । नेपालको इतिहासका विभिन्न कालखण्डमा विभिन्न किसिमका संविधान आए तर ती सबै संविधान शासकबाट निर्देशित वा संविधान लेखन समितिका सुझावका आधारमा निर्माण भएका थिए । ती संविधानलाई जनताले आफ्नो संविधानका रूपमा ग्रहण गर्न नसक्दा राज्यको शासकीय स्वरूप र संविधानलाई लिएर राजनीतिक तहमा विभिन्न विवाद चलिरहे । त्यसको फलस्वरूप देशको राजनीति स्थिर हुनसकेन । पछिल्लो समयमा देश १० वर्ष लामो सशस्त्र आन्तरिक द्वन्द्वमा समेत फस्यो । देशमा परिवर्तका लागि २०४६ र २०६२/०६३ सालमा ठूलठूला जन-आन्दोलन भए । २०६२/०६३ को जन-आन्दोलनले त राजतन्त्रलाई विस्थापन गरी मुलुकमा लोकतन्त्रिक गणतन्त्र स्थापना गऱ्यो भने मधेश आन्दोलनले समावेशीको मुद्दालाई दरिलोसँग उजागर गऱ्यो ।

नेपालको संविधान जनताले आफैं निर्माण गर्नुपर्छ र त्यसमा हरेक वर्ग लिङ्ग, जाति, क्षेत्र र समूहका जनताको समान अधिकार र स्वामित्व स्थापित हुनुपर्छ भनी संविधानसभाको अवधारणा अगाडि आयो । यही अवधारणाले १० वर्षे सशस्त्र द्वन्द्वलाई समेत शान्ति प्रक्रियामा ल्यायो । तर दुर्भाग्य ! पहिलोपटक निर्वाचित संविधानसभाले संविधान निर्माण गर्नसकेन र दोस्रो संविधानसभाको निर्वाचन गर्नुपऱ्यो । हाल दोस्रो संविधानसभाले संविधान निर्माणको काम अगाडि बढाइरहेको छ । संविधानसभाका लागि भएका यी दुवै निर्वाचन, निर्णय र नीति-निर्माणलगायतका प्रक्रिया सबैको समावेशीकरणका लागि गरिएका अभ्यासहरूमा अपाङ्गता भएका व्यक्तिहरूमाथि भने दोस्रो दर्जाको नागरिकको व्यवहार गरियो । सदियौँदेखि विभेद, उपेक्षा र दुर्व्यवहारको सिकार भएर पनि हरेक जन-आन्दोलन र राजनीतिक परिवर्तनमा सधैँ अग्रपङ्तिमा रहेर जनतालाई उत्प्रेरणा दिने अपाङ्गता भएका व्यक्तिहरू आज आफ्नै संविधानमा अरूसरह आफ्ना अधिकार आफैं लेख्छौं भन्दा पछाडि पारिएका छन् । संविधानसभाको निर्वाचन दोस्रोपटक हुँदासमेत त्यहाँ देशको जनसङ्ख्याको एउटा मुख्य र त्यसमा पनि उपेक्षा र विभेदको मारमा परेको अपाङ्गता भएका व्यक्तिहरूको समूहबाट प्रतिनिधित्व शून्य हुनुले राष्ट्रिय अपाङ्ग महासंघ-नेपाललाई अत्यन्त दुःखी तुल्याएको छ ।




प्रत्यक्ष र समानुपातिक निर्वाचन प्रणालीमा अपाङ्गता भएका व्यक्तिहरूको सहभागितालाई वेवास्ता गरिएपछि हामीले विभिन्न शान्तिपूर्ण प्रयासहरू मार्फत् मन्त्रिपरिषद्बाट मनोनीत हुने २६ जना सभासद्को मनोनयन गर्दा अपाङ्गता भएका व्यक्तिहरूलाई अनिवार्यरूपमा समावेश गर्नका लागि आवाज उठाउँदा पनि राज्यले नसुनेपछि रिले अनसन बस्नुपरेको तथ्यसमेत कसैबाट छुपेको छैन । रिले अनसनको परिणामस्वरूप नेपाल सरकारसँग संविधानसभामा अपाङ्गता भएका व्यक्तिहरूलाई समावेश गराउने प्रतिवद्धतासहित लिखित सम्झौतासमेत भएको छ । उक्त सम्झौता आफैँमा एउटा सकारात्मक पक्ष भए पनि हालसम्म त्यसको कार्यान्वयनलाई सरकारले अगाडि बढाएको छैन । तसर्थ, चाँडोभन्दा चाँडो अपाङ्गता भएका व्यक्तिहरूको अर्थपूर्ण प्रतिनिधित्वसहित २६ जना सभासद्को मनोनयन गर्न र आगामी दिनमा पनि सरकारले गर्ने यस्ता कुनै पनि समावेशी अभ्यास र निर्णय प्रक्रियामा अपाङ्गता भएका व्यक्तिहरूको सहभागिता र प्रतिनिधित्वलाई सुनिश्चित गर्न सरकारसँग जोडदार माग गर्छौं ।

■ **सुदर्शन सुवेदी**
अध्यक्ष




# अपाङ्गता र अधिकार



**हुमकला पाण्डे**
**उपसचिव, महिला बालबालिका तथा समाज कल्याण मन्त्रालय अपाङ्गता अधिकार प्रवर्द्धन शाखा**

अपाङ्गता (disability) को शाब्दिक अर्थ कुनै पनि व्यक्ति शारीरिक तथा मानसिकरूपमा कमजोर भन्ने हुन्छ। यसका विभिन्न अन्य पर्यायवाची नेपाली शब्द पनि चलन चल्तीमा पाइन्छ। शारीरिक तथा मानसिक कमजोरी प्राकृतिकरूपमा जन्मँदै वा जन्मिसकेपछि विभिन्न दुर्घटना वा बिरामीका साथै अन्य कारणबाट हुनेगरेको पाइन्छ। शारीरिक तवरमा हुने कमजोरीमा शरीरका विभिन्न अङ्ग सद्दे नहुनु वा कमजोर हुनु, आँखा नदेख्नु वा कमजोर हुनु, कानले सुन्न नसक्नु तथा बोली वा वाक्य प्रस्फुटन हुन नसक्नु, आदि पर्छन्।

शारीरीक, मानसिक, बौद्धिक वा इन्द्रियसम्बन्धी दीर्घकालीन अशक्तताद्वारा सिर्जित विभिन्न अवरोधहरूसँगको अन्तरक्रियाका कारणले समाजमा अन्य व्यक्तिहरूसरह समान आधारमा पूर्ण र प्रभावकारी ढङ्गमा सहभागी हुन बाधा भएको व्यक्तिसमेतलाई अपाङ्गता भनिन्छ (CRPD)।

विश्व स्वास्थ्य संगठनले मानिसको शरीर र शारीरिक प्रणालीमा आएको क्षति (Bodily Impairments) का कारणले पर्ने क्रियात्मक असर र समाजमा पूर्ण सहभागी हुन नसक्ने अवस्था (Participation ReQmrictions) लाई अपाङ्गताको अवस्था मानेको।

शरीरका अङ्गहरू र शारीरिक प्रणालीमा भएको समस्याका कारण भौतिक, सामाजिक, सांस्कृतिक वातावरणका साथै सञ्चारसमेतबाट सिर्जना भएको अवरोधसमेतले दैनिक क्रियाकलाप सामान्यरूपमा सञ्चालन गर्न एवं सामाजिक जीवनमा पूर्णसहभागी हुन कठिनाइ हुने अवस्थालाई अपाङ्गता भनिन्छ (नेपाल सरकार, राजपत्र, २०६३)।

माथिका अपाङ्गता भएका व्यक्तिहरूका अधिकारसम्बन्धी महासन्धि, विश्व स्वास्थ्य सङ्गठन र नेपाल सरकारका परिभाषा अनुसार अपाङ्गता कुनै अभिशाप नभएर शारीरिक प्रणाली तथा शरीरका अङ्गमा

हुने क्षतिका कारणले शारीरिक, मानसिक, बौद्धिक वा इन्द्रियसम्बन्धी दीर्घकालीन अशक्तता उत्पन्न हुनु तथा यस्तो अवस्थाका कारण भौतिक, सामाजिक, सांस्कृतिक वातावरणमा पूर्णरूपमा सहभागी हुन नसक्ने अवस्था हो। अपाङ्गताको अवस्थाका कारण व्यक्तिको पहुँच भौतिक क्षेत्र तथा सञ्चारसमेतमा साँगुरिँदै जाँदा पहिचान, अवसर र सम्मानबाट बञ्चित हुन्छ, जसका कारण मानवका रूपमा पाउनु पर्ने हक–अधिकारबाट समेत बञ्चित हुनपुगेको हुन्छ।

विश्व स्वास्थ्य सङ्गठनले विश्वमा कूल जनसङ्ख्याको ७ देखि १० प्रतिशतसम्म अपाङ्गता भएका व्यक्ति हुनसक्ने अनुमान गरेको छ। नेपालमा अपाङ्गता भएका व्यक्तिहरूको सही तथ्याङ्कहरूको अभाव देखिन्छ। सन् १९७१ मा गरिएको राष्ट्रिय जनगणनामा नेपालको कूल जनसङ्ख्याको १.५ प्रतिशतमा अपाङ्गता रहेको तथ्याङ्कले देखाएको थियो। सन् १९८० मा अन्तर्राष्ट्रिय अपाङ्गता वर्ष मनाउने क्रममा सर्वप्रथम नेपालमा अपाङ्गता भएका व्यक्तिहरूको नमूना सर्वेक्षणबाट कूल जनसङ्ख्याको ३.३३ प्रतिशतमा अपाङ्गता पाइएको तथ्याङ्क सार्वजनिक भयो। राष्ट्रिय जनगणना– २०५८ मा भने नेपालमा कूल जनसङ्ख्याको ०.४५ प्रतिशतमा मात्र अपाङ्गता भएको अनुमान गरिएको छ। नेपालको जनगणना, २०६८ अनुसार कूल जनसङ्ख्याको लगभग २ प्रतिशत अपाङ्गता भएका व्यक्ति रहेका छन्, जसमध्ये शारीरिक, हेराइ, सुनाइ, बोलाइ तथा हेराइ बोलाइ, बौद्धिक, मानसिक तथा बहु–अपाङ्गता भएका व्यक्तिहरू क्रमशः ३६.३२, १८.४६, १५.४५, १.८४, ११.४७,, २.९०, ६.०४ ७.५२ प्रतिशत रहेको छ। (तालिका हेर्नुहोला)

| लिङ्ग | जनसङ्ख्या | अपाङ्गता जनसङ्ख्या | प्रतिशत |
|---|---|---|---|
| पुरूष | १,२८,४९,०४१ | २,८०,०८६ | २.१८ |
| महिला | १,३६,४५,४६३ | २,३३,२३५ | १.७१ |
| जम्मा | २,६४,९४,५०४ | ५,१३,३२१ | १.९४ |

विश्व बैंकको प्रतिवेदन (सन् १९९९) अनुसार विश्वका अति गरीबमध्ये अपाङ्गता भएका व्यक्तिहरू १५ देखि २० प्रतिशत छन्। त्यस्ता व्यक्तिहरूलाई ग्रामीण गरिबी निवारण जस्ता कार्यक्रममा समेत समावेश गरिएको छैन। युनिसेफ (सन् १९९०) का अनुसार सडक युवामध्ये ३० प्रतिशत अपाङ्गता भएका व्यक्ति छन्। युनेस्कोका अनुसार विकासोन्मुख मुलुकमा ९८ प्रतिशत अपाङ्गता भएका बालबालिका विद्यालय जानबाट वञ्चित छन्।

## अपाङ्गतासम्बन्धी अन्तर्राष्ट्रिय नीति तथा कानुन

संयुक्त राष्ट्रसंघले सन् १९४८ मा मानव अधिकारको विश्वव्यापी घोषणा गरेपछि सन् १९७१ मा सुस्तमनस्थिति भएका व्यक्तिहरूका लागि र सन् १९७५ मा अपाङ्गता भएका व्यक्तिहरूका लागि मानव अधिकार प्रत्याभूति हुने दस्तावेजको घोषणा गरेको पाइन्छ। यसपछि संयुक्त राष्ट्रसंघले सन् १९८१ मा अन्तर्राष्ट्रिय अपाङ्गता वर्ष मनाउने क्रममा अन्तर्राष्ट्रिय अपाङ्गता जनपरिषद् स्थापना गरी सन् १९८२ डिसेम्बर ३ तारिखमा अपाङ्गता भएका व्यक्तिहरूका लागि विश्व कार्ययोजना निर्माण गर्‍यो। सन् १९८३ देखि १९९२ सम्म अन्तर्राष्ट्रिय अपाङ्गता दशकको रूपमा विश्वभरि अपाङ्गता भएका व्यक्तिहरूका लागि विभिन्न कार्यक्रम आयोजना गरियो। यसका साथै सन् १९८९ को बाल अधिकारसम्बन्धी महासन्धिले अपाङ्गता भएका बालबालिकाका अधिकार, सन् १९९० को जोमटिएन र सन् २००२ को डाकार घोषणाले "सबैको लागि शिक्षा" घोषणापत्र जारी गरेर अपाङ्गता भएका बालबालिकासमेतको शिक्षाको अवसरलाई सुनिश्चित गरिएको छ।

संयुक्त राष्ट्रसंघको अन्तर्राष्ट्रिय अपाङ्गता दशकको घोषणा अनुरूप सन् १९९३ देखि २००२ सम्म एसिया प्रशान्त क्षेत्रीय अपाङ्गता भएका व्यक्तिहरूको दशकका रूपमा यस क्षेत्रभरि मनाइयो। संयुक्त राष्ट्रसंघले यसै समयमा अपाङ्गता भएका व्यक्तिहरूका लागि अवसर सिर्जना गर्ने अवसर समानीकरणसम्बन्धी प्रमाणिक नियमहरू लागू गर्‍यो। विकासोन्मुख देशहरूमा अपाङ्गता भएका व्यक्तिहरूको जीवनमा कुनै खास परिवर्तन आउन नसकेको अवस्थालाई मध्यनजर गर्दै सन् २००३ देखि २०१२ सम्मलाई पुनः एसिया प्रशान्त क्षेत्रीय अपाङ्गता भएका व्यक्तिहरूको विस्तारित दशकको रूपमा मनाउने घोषणा गरियो। लक्षित वर्गको गाँस, बास, कपास, शिक्षा, स्वास्थ्य, रोजगारी तथा सहभागिता सुनिश्चित गर्दै सेवा प्रदान प्रक्रियामा सरलता र गुणस्तर अभिवृद्धि गर्नका लागि अपाङ्गता भएका व्यक्तिहरूको सामाजिक संरक्षणका रूपमा विश्व स्वास्थ्य संगठनले समुदायमा आधारित पुनःस्थापना कार्यक्रम अन्तर्गत विभिन्न कार्यक्षेत्र एवं तत्वहरू पहिचान गरेको छ।

## नेपालमा अपाङ्गता भएका व्यक्तिका लागि गरिएका व्यवस्था

नेपालले संयुक्त राष्ट्रसंघको सदस्य राष्ट्रका हैसियतले

| शारीरिक | हेराइ | सुनाइ | बोलाइ तथा हेराइ | बोलाइ | बौद्धिक | मानसिक | बहु–अपाङ्गता |
|---|---|---|---|---|---|---|---|
| ३६.३२% | १८.४६% | १५.४५% | १.८४% | ११.४७% | २.९०% | ६.०४% | ७.५२% |

विभिन्न अन्तर्राष्ट्रिय घोषणापत्रलगायत महासन्धिमा हस्ताक्षर गरी तिनको पालना गर्ने प्रतिवद्धता जनाउँदै आएको छ। यसैअनुरूप नेपाल सरकारले प्रत्यक्ष/अप्रत्यक्षरूपमा अपाङ्गता भएका व्यक्तिहरूका लागि लक्षित वर्ग अन्तर्गत राखेर समाज कल्याणको पाटोअन्तर्गत विभिन्न कार्यक्रममार्फत सम्बोधन गर्दै आएको थियो।

अपाङ्गता संरक्षण ऐन, २०३९ र नियमावली, २०५१ ले अपाङ्गता भएका व्यक्तिहरूको अपाङ्गतापनको निर्धारण गर्न, हितको संरक्षण गर्न, समानताको हक, स्वास्थ्य तथा औषधोपचारको व्यवस्था, तालिम तथा रोजगारीको व्यवस्था, अपाङ्गताहरूमा प्राथमिकता, आयकर, निवृत्तीभरण, रोजगारी, यातायातमा सीट सुरक्षित राख्ने, पालन पोषण, अपाङ्गता घरको व्यवस्था, सरकारी वा अन्य प्रकारका सार्वजनिक सेवामा हुने कुनै पनि नियुक्ति र बढुवामा हुने भेदभावमा प्रतिबन्ध लगाउने व्यवस्था गरेको छ। पच्चीस जनाभन्दा बढी मजदुर नियुक्त गरिने कारखानाले जम्मा मजदुर सङ्ख्याको पाँच प्रतिशतमा नघटाई शारीरिक मानसिक क्षमताका आधारमा अपाङ्गता भएकाहरूलाई उपयुक्त हुने काममा नियुक्त हुनेगरी तोक्न सक्ने, स्वास्थ्य केन्द्र वा अस्पतालमा निःशुल्क स्वास्थ्य उपचार, शैया आरक्षण, ५० भन्दा बढी शैया भएका अस्पतालमा बढीमा २ वटा शैया निःशुल्क उपलब्ध गराउने व्यवस्था र नेपाल सरकारले ४१ प्रकारका औषधि निःशुल्क उपलब्ध गराउनेलगायतका व्यवस्था गऱ्यो।

अन्तरिम संविधान, २०६३ ले विशेष संरक्षणको व्यवस्था, रोजगारी तथा सामाजिक सुरक्षासम्बन्धी हक, श्रम अभ्यास गर्न पाउने तथा सकारात्मक विभेदको नीति लागू गर्ने जस्ता व्यवस्था गरेको छ। त्यस्तै निजामती सेवा ऐन, २०४९ र शिक्षा ऐन, २०२८ ले ५ प्रतिशत आरक्षणको व्यवस्था गरेको छ। लोकसेवा आयोगले लेखन सहयोगी उपलब्ध गराउने तथा उमेरको हद ४० वर्ष कायम गरेको छ। श्रम ऐन, २०४८ ले कामदार र उसका परिवारलाई कार्यथलोमा भएका दुर्घटनावापत क्षतिपूर्तिको व्यवस्था गरेको छ। हवाइ सेवाका आन्तरिक उडानमा ५० प्रतिशत भाडा छूट र अपाङ्ता भएकाहरूले उपयोग गर्ने सहयोगी सामग्रीमा कर छूट र सामाजिक सुरक्षा भत्ता जिल्लाबाट स्थानीय निकायमार्फत प्राप्त हुने, सङ्घीय मामिला तथा स्थानीय विकास मन्त्रालयले सामाजिक सुरक्षा कार्यान्वयन कार्यविधि, २०६६ कार्यान्वयन गर्दै पूर्ण अशक्त अपाङ्गता भएकालाई प्रति महिना एक हजार, अति अशक्त अपाङ्गता भएकालाई प्रति महिना ३०० रूपियाँ (आ.व. २०७१/०७२ देखि सबैलाई) भत्ताका रूपमा उपलब्ध गराउँदै आएको छ।

### विश्व स्वास्थ्य संगठनले समुदायमा आधारित पुनःस्थापना कार्यक्रमअन्तर्गत पहिचान गरेका कार्यक्षेत्र एवं तत्व

१. **स्वास्थ्य :** प्रवर्द्धनात्मक, रोकथाममूलक, उपचारात्मक, पुनःस्थापना, सहायक सामग्रीहरू,

२. **शिक्षा :** प्रारम्भिक बाल विकास, अनौपचारिक, प्राथमिक तह, माध्यमिक र उच्च शिक्षा, जीवनपर्यन्त शिक्षा अर्थात विषेश शिक्षा र तयारी कक्षाहरू,

३. **जीवन निर्वाह :** सिप विकास, आय-आर्जन क्रियाकलाप, आर्थिक सेवामा पहुँच, रोजगारी, आर्थिक योगदान र सामाजिक सुरक्षा,

४. **सशक्तीकरण :** स्वावलम्बी समूहहरू, अपाङ्गता भएका व्यक्तिहरूका संगठन, सामाजिक परिचालन, राजनीतिक सशक्तीकरण, भाषा र सञ्चार,

५. **सामाजिक :** कानुनी संरक्षण, संस्कृति र धर्म, खेलकुद र मनोरञ्जन, सम्बन्ध, विवाह र परिवार, व्यक्तिगत सहयोग।

शिक्षा मन्त्रालयले निःशुल्क शिक्षा र समावेशी शिक्षाको पहुँच अभिवृद्धिका काम गर्दै आएको छ। विभिन्न सरकारी तथा अर्ध सरकारी संस्थाहरू जस्तै : राष्ट्रिय मानव अधिकार आयोग (संवैधानिक), मानव अधिकारसम्बन्धी संसदीय समिति, राष्ट्रिय सूचना आयोग, अन्य सरकारी संस्थाहरू (प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय, शिक्षा मन्त्रालय, स्वास्थ्य तथा जनसङ्ख्या मन्त्रालय, शान्ति तथा पुनःनिर्माण मन्त्रालय) ले समेत प्रत्यक्ष/अप्रत्यक्ष तहबाट अपाङ्गताको सामाजिक संरक्षणमा जिम्मेवारी वहन गरिरहेका छन्।

नेपाल सरकारले २०६३ मा अपाङ्गता नीति तथा राष्ट्रिय कार्ययोजना तयार गरी तत्कालीन तीन वर्षीय अन्तरिम योजना (आ.व. २०६४/०६५-२०६६/०६७) मा अपाङ्गता भएका व्यक्तिका लागि विभिन्न कार्यक्रम सञ्चालनमा ल्यायो। महिला, बालबालिका तथा समाजकल्याण मन्त्रालयले २०५८ सालदेखि अपाङ्गता भएका व्यक्तिहरूको हकहित संरक्षणलगायत उनीहरूको सशक्तीकरण र विकास गरी समुदायमै सहज जीवनयापन गराउन समुदायमा आधारित पुनःस्थापना कार्यक्रम लागू गऱ्यो। आ.व. २०६६/०६७ देखि नेपालका ७५ जिल्लामा यसलाई निरन्तरता दिइएको छ। समुदायमा आधारित पुनःस्थापना कार्यक्रमले अपाङ्गता भएका व्यक्तिहरूलाई समुदायमै राखेर तालिम तथा रोजगारी, जनचेतना र

**महिला, बालबालिका तथा समाजकल्याण मन्त्रालयले अपाङ्गता भएका व्यक्तिका हक–अधिकार सुनिश्चित गर्न निम्नानुसारका सेवा सुविधा उपलब्ध गराउँदै आएको छ :**

- अपाङ्गता भएका व्यक्तिहरूका सवालमा राष्ट्रिय नीति, कानुन र निर्देशिकाहरूको निर्माण ।
- अपाङ्गता भएका व्यक्तिका सवालमा काम गर्न सरकारी, गैरसरकारी तथा अपाङ्गता भएका व्यक्तिका लागि काम गर्ने संस्था (DPO's)सँग समन्वय ।
- अपाङ्गता भएका व्यक्तिहरूलाई परिचयपत्र वितरण ।
- ७५ वटै जिल्लामा अपाङ्गता भएका व्यक्तिहरूका लागि समुदायमा आधारित पुनःस्थापना कार्यक्रम सञ्चालन ।
- अपाङ्गता भएका व्यक्तिका हक–अधिकारसम्बन्धी सूचना सम्प्रेषण गर्न ७५ वटै जिल्लामा हेल्प–डेस्क स्थापना गरिने,
- सहायक सामग्री निर्माण तथा निःशुल्क वितरणका लागि पाँचै विकास क्षेत्रमा विभिन्न सहायक सामग्री पुनःस्थापना केन्द्रहरूलाई अनुदान ।
- अपाङ्गता भएका व्यक्तिको पहिचान, पहुँच, अवसर र स्रोत-साधनमाथिको नियन्त्रण कायम गर्ने क्षमता विकासका कार्यक्रम महिला, बालबालिका तथा समाजकल्याण मन्त्रालय र अपाङ्गताका क्षेत्रमा काम गर्ने संस्थाको साझेदारीमा सञ्चालित,
- अपाङ्गता भएका व्यक्तिहरूलाई सशक्त गरी रोजगारी र स्वरोजगारीमा पहुँच पुऱ्याउन अपाङ्गता क्षेत्रमा काम गर्ने विभिन्न संस्थालाई सशर्त अनुदान,
- अपाङ्गता भएकाहरूका अधिकारलाई मानव अधिकारका रूपमा जनचेतना अभिवृद्धि गरी अधिकारको संरक्षण, संवर्द्धन र उपभोगको वातावरण सिर्जना गर्न तथा भौतिक संरचना र सञ्चार क्षेत्रमा पहुँच अभिवृद्धि गर्न रेडियो नेपाल र नेपाल टेलिभिजनबाट अपाङ्गतासम्बन्धी कार्यक्रम प्रसारण,
- सार्वजनिक भौतिक संरचना तथा सञ्चार प्रणालीलाई अपाङ्गतामैत्री बनाउन समन्वय ।

पैरवी, पहुँच, सञ्चार, शिक्षा, जीविकोपार्जन, सशक्तीकरण, स्वास्थ्योपचार र सहायक सामग्रीलगायतका सेवा प्रदान गर्ने गर्दछ। यसका लागि नेपालका ७५ वटै जिल्लामा सी.वी.आर. कार्यक्रम सञ्चालन निर्देशिका अनुसार जिल्ला समन्वय समितिका माध्यमबाट अपाङ्गताका क्षेत्रमा काम गर्ने संस्था छनौट गरी महिला, बालबालिका कार्यालयको समन्वयमा कार्यक्रम सञ्चालन गरिएको छ। यसै सन्दर्भमा अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धि, २००६ लाई नेपालले २००९ मा अनुमोदन गरी २०१० देखि कार्यान्वयनमा ल्याई राष्ट्रिय कानुनहरूको घरेलुकरण गर्ने क्रममा अपाङ्गतासम्बन्धी संरक्षण तथा कल्याण ऐन, २०३९ को मस्यौदा अन्तिम चरणमा रहेको छ।



नेपाल सरकारले १. शारीरिक अपाङ्गता, २. दृष्टिसम्बन्धी अपाङ्गता क. दृष्टिविहीनता ख. न्यून दृष्टियुक्तता, ३. सुनाइसम्बन्धी अपाङ्गता क. बहिरा ख. सुस्त श्रवण ४. श्रवण दृष्टिविहीन, ५. स्वर र बोलाईसम्बन्धी अपाङ्गता, ६. मानसिक अपाङ्गता क. बौद्धिक अपाङ्गता ख. मानसिक अपाङ्गता र ७. बहु–अपाङ्गता गरी सात प्रकारमा बाँडेको छ। त्यस्तै अपाङ्गताको गम्भीरताका आधारमा अपाङ्गता भएका व्यक्तिलाई पूर्ण अशक्त अपाङ्गता : रातो कभरमा पहेंले अक्षरले लेखिएको वर्ग "क". अति अशक्त अपाङ्गता, नीलो कभरमा पहेंलो अक्षरले लेखिएको वर्ग "ख", मध्यम अपाङ्गता : पहेंलो

# अपाङ्गता भएका व्यक्तिकालागि पहुँचयुक्त भौतिक संरचना तथा सञ्चार सेवा निर्देशिका २०६९

(नेपाल सरकार (मन्त्रिपरिषद्)को मिति २०६९।११।६ को बैठकबाट स्वीकृत)



नेपाल सरकार
महिला बालबालिका तथा समाजकल्याण मन्त्रालय
सिंहदरवार, काठमाडौं

**सन् १९८९ को बाल अधिकारसम्बन्धी महासन्धिले अपाङ्गता भएका बालबालिकाका अधिकार, सन् १९९० को जोमटिएन र सन् २००२ को डाकार घोषणाले "सबैको लागि शिक्षा" घोषणापत्र जारी गरेर अपाङ्गता भएका बालबालिकासमेतको शिक्षाको अवसरलाई सुनिश्चित गरिएको छ।**

कभरमा कालो अक्षरले लेखिएको वर्ग "ग" सामान्य अपाङ्गता : सेतो कभरमा कालो अक्षरले लेखिएको वर्ग "घ" वर्गमा वर्गीकरण गरी परिचयपत्र उपलब्ध गराउँदै आएको छ।

नेपाल सरकारले यी विविध व्यवस्था गर्दा गर्दै पनि अपाङ्गता भएका व्यक्तिहरूका हक-अधिकारको पूर्ण संरक्षण र प्रवर्द्धन गर्न सकिएको छैन। सामाजिक संरक्षणसम्बन्धी नीतिले स्पष्टरूपमा अपाङ्गताको सामाजिक संरक्षणको स्वरूप किटान गर्न नसकेको, परिचयपत्र वितरण प्रक्रियामा एकरूपता नरहेको, विद्यमान कानुनी प्रावधान र अदालती फैसलाहरूको कार्यान्वयनमा समन्वयको अभाव रहनु, ग्लऋद्ऋच्एम् को मान्यता र भावना समेटेर घरेलु कानुनहरूको संशोधन प्रक्रियाकै चरणमा रहनु, नीतिगत प्राथमिकतालाई सम्बोधन गरी काम गर्ने संस्कारको विकास नभइसक्नु जस्ता नीतिगत समस्या सम्बोधन गर्नु पर्ने देखिन्छ। त्यस्तै सरकार, निजी क्षेत्र तथा गैरसरकारी संस्थाबाट सम्पादन हुने कार्यमा दोहोरोपन (Overlapping), लक्षित वर्गमा कार्यक्रममा केन्द्रदेखि स्थानीय तहसम्म एकरूपता र समन्वयको कमी, सरोकारवाला निकायमा क्षमताको कमी तथा अपाङ्गताका विषयमा बुझ्ने जनशक्तिको अभावजस्ता संस्थागत समस्या रहेका छन्। त्यसैगरी अनुगमन र मूल्याङ्कन मापनीय हुन नसक्नु, अपाङ्गता हुनुपूर्व रोकथामका कार्यक्रमलाई जोड दिन नसक्नु, आवश्यक सूचना तथा तथ्याङ्कको अभावमा पूर्ण र अति अशक्त अपाङ्गता भएका व्यक्तिको वास्तविक अवस्थाको अभाव, सामाजिक संरक्षण ऋजबचष्तथ दबकभम तथा वितरणमुखी अवधारणामा मात्र वितरण हुनु जस्ता व्यावहारिक समस्या रहेका छन्।

वास्तविक र गरिबीको मारमा परेका अपाङ्गता भएकाहरूको पहिचान गरी सामाजिक संरक्षण प्रदान गर्ने, अपाङ्गतासम्बन्धी आवश्यक सूचना तथा तथ्याङ्क अध्यावधिक गर्ने, राज्यद्वारा प्रदान गरिने सेवा-सुविधा सबै अपाङ्गता भएका व्यक्तिहरूसमक्ष पुऱ्याउने, अपाङ्गता भएका व्यक्तिहरूको हितका लागि आवश्यक पर्ने सेवा विस्तार गर्ने तथा अपाङ्गतासम्बन्धी सचेतनाको विकास गर्ने, सार्वजनिक स्थल, सवारी साधन तथा सेवाहरूलाई अपाङ्गतामैत्री बनाउने, अपाङ्गता भएका व्यक्तिहरूलाई स्वरोजगारमूलक सीप प्रदान गरी आत्मनिर्भर बनाउने, अपाङ्गता भएका व्यक्तिहरूका लागि आवश्यक पर्ने सेवा-सुविधाका लागि आवश्यक पर्ने सेवा-सुविधा र कृत्रिम साधन सहजरूपमा निःशुल्क उपलब्ध गराउने कार्य-चुनौतीलाई सम्बोधन गर्ने महिला, बालबालिका तथा समाज कल्याण मन्त्रालयको जिम्मेवारी रहेको छ।



सम्मेलन उद्‌घाटन गर्नुहुँदै महिला, बालबालिका तथा समाज कल्याणमन्त्री निलम के.सी. खड्का

# अपाङ्गता भएका महिलाको दक्षिण एसियाली प्रथम सम्मेलन

प्रस्तुति : मनिष प्रसाईं

सम्मेलनमा हिंसा न्यून गरी न्यायमा पीडितको पहुँच बढाउन आ–आफ्ना सरकारलाई विशेष कानुन निर्माण गर्न दवाव दिन ऐक्यबद्धता जनाइयो। त्यस अवसरमा अपाङ्गता भएका महिलाका विभिन्न सवाल समेटिने गरी १७ वटा कार्यपत्र प्रस्तुत भई विस्तृत छलफल भयो। त्यस्ता विषयमा अन्तरक्रिया तथा समूहगत कार्य गरी निष्कर्ष समेत निकालिए।

ड्का

**अपाङ्गता भएका** महिलाहरूको दक्षिण एसियाली प्रथम सम्मेलन १५ बुँदे घोषणापत्र *(हेर्नुहोस् बक्स)* जारी गर्दै काठमाडौँमा सम्पन्न भएको छ। संजाल निर्माण र क्षमता अभिबृद्धिका माध्यमबाट अपाङ्गता भएका महिलाहरूका अधिकारको विकासका लागि वकालत गर्ने उद्देश्यले २०७१ असार ३० र ३१ मा भएको सम्मेलनको नारा "Our Inclusion, Our Network , Combating against Violence of Women with Disabilities" रहेको थियो।

अपाङ्गता भएका व्यक्तिले समाजमा विविधखाले विभेदलगायतका समस्या व्यहोर्नु परिरहेको अवस्था विश्वभरि नै पाइन्छ। त्यसमा पनि अपाङ्गता भएका महिलाले त अझ बढी समस्या भोग्नु परिरहेको छ। दक्षिण एसिया क्षेत्रमा त यो समस्या अझ बढी पाइन्छ। यस्ता समस्या समाधानका लागि संयुक्त पहल अति जरूरी छ। संगठितरूपमा अपाङ्गता भएकामध्ये पनि महिलाका समस्या समाधान गर्न महिलाहरूको सशक्तीकरण गरिनु अति आवश्यक छ।

त्यस अवसरमा राज्य संचालनका सबै प्रक्रियामा अपाङ्गता भएका महिलाको निर्णायक प्रतिनिधित्व हुनु आवश्यक भएको र हिंसा न्यून गरी न्यायमा पीडितको पहुंच बढाउन आ-आफ्ना सरकारलाई विशेष कानुन निर्माण गर्न दवाव दिने जस्ता ऐक्यबद्धता जनाइयो। त्यस अवसरमा अपाङ्गता भएका महिलाका विभिन्न सवाल समेटिने गरी १७ वटा कार्यपत्र प्रस्तुत भई विस्तृत छलफल गरियो। देश तथा विदेशका सम्बन्धित विषय-विज्ञबाट प्रस्तुत कार्यपत्र प्रस्तुतिपछि त्यस्ता विषयमा अन्तरक्रिया तथा समूहगत कार्य गरी निष्कर्षहरू समेत निकालिए।

विशेषगरी दक्षिण एसियामा रहेका अपाङ्गता भएका महिलाहरू अपाङ्गता भएका समुदायभित्र समेत लैंगिक विभेदको शिकार भएका, उनीहरूमाथि दिनानुदिन यौनिक हिंसा, बलात्कार र घरेलुहिंसाको जोखिम बढेको, गरिबीको शिकार भई अपमानित जीवनयापन गर्न वाध्य पारिएको, विवाह नहुनु, पैत्रिक सम्पत्तिमा हक नहुनुका साथै सार्वजनिक भौतिक संरचना अपांगतामैत्री नहुँदा शिक्षा, स्वास्थ्य, रोजगारी, सामाजिकीकरण, सामाजिक सुरक्षा, प्रजनन स्वास्थ्य अधिकारबाट वंचित भएका जस्ता सवालमा एकमत भई व्यापक छलफल भयो। *(सम्मेलनमा प्रस्तुत भएका कार्यपत्र र प्रस्तोताको विवरण बक्समा हेर्नुहोला।)*

महिला, बालबालिका तथा समाज कल्याणमन्त्री निलम के.सी. खड्काले उद्घाटन गर्नुभएको २ दिने सम्मेलनमा नेपालका साथै भारत, पाकिस्थान, श्रीलंका, बंग्लादेश, अफगास्थिान, भुटान र माल्दिभ्सका प्रतिनिधिसहित ८० जनाको सहभागिता थियो।

उद्घाटन सत्रको प्रमुख अतिथिका रूपमा सम्मेलनलाई सम्बोधन गर्ने क्रममा मन्त्री खड्काले नेपालमा अन्य महिलाभन्दा अपाङ्गता भएका महिला अझ धेरै विभेद र हिंसामा परेको स्वीकार्नुभयो।

उहाँले आफ्नो कार्यकालमा सकेसम्म यस क्षेत्रलाई अगाडि बढाउने र अपाङ्गता भएका व्यक्तिहरूको



## सञ्जाल निर्माण र क्षमता अभिवृद्धिका माध्यमबाट अपाङ्गता भएका महिलाहरूको अधिकार प्रवर्द्धनका लागि दक्षिण एसियाली सम्मेलन

# काठमाडौं घोषणापत्र

### १४ १५ जुलाइ २०१४ (असा ३०-३१, २०७०), काठमाडौँ



१. अपाङ्गता भएका महिलाहरू बहु-विभेदबाट प्रभावित छन् भन्ने तथ्यप्रति गहिरो चासो राख्दै अपाङ्गता भएका महिलाहरूविरूद्ध हुने विभेद र हिंसा हटाउन बाध्यकारी कानुन र नीतिहरू ल्याई कार्यान्वयन गर्न माग गर्दछौँ ।

२. अपाङ्गता भएका महिलाहरूलाई परनिर्भर, निस्क्रिय र आर्थिक रूपमा कमजोर तुल्याएको तथा उनीहरूले घरमा रहेर गर्ने योगदानलाई समेत कुनै महत्व नदिइएको यथार्थलाई उठान गर्दै उनीहरूको आर्थिकलगायत जीवनका विभिन्न क्षेत्रमा सशक्तीकरणका लागि प्रभावकारी कार्यक्रम, नीति र कानुनी प्रावधानहरू सुनिश्चित गर्न माग गछौँ ।

३. विभिन्न राष्ट्रिय र अन्तर्राष्ट्रिय तहका नीति-निर्माण प्रक्रिया र संयन्त्रहरूमा अपाङ्गता भएका महिलाहरूको सहभागिता असाध्यै न्यून रहेको कुरालाई स्वीकार गर्दै हामी सबै सरोकारवालाहरूसँग त्यस्ता प्रक्रिया र संयन्त्रहरूमा उनीहरूको अर्थपूर्ण सहभागिता र प्रतिनिधित्व सुनिश्चित गर्न माग गछौँ ।

४. विभेद, गरिबी, हिंसा, भौतिक अवरोध, सांकेतिक भाषाको अभाव, मैत्रीपूर्ण पाठ्याक्रम र शैक्षिक नीतिको अभावका कारण शिक्षाको अधिकारमा अपाङ्गता भएका बालिकाहरूको पहुँच असाध्यै न्यून रहेको तथ्यलाई स्वीकार गर्दै सबै सम्बन्धित सरोकारवाला तथा सरकारहरूमा अपाङ्गता भएका बालिकाहरूको शिक्षामा समान पहुँच स्थापित गर्न नीति, कानुन र संयन्त्रहरूको सुनिश्चिततालगायत सबै उपाय अबलम्बन गर्न सिफारिस गछौँ ।

५. अपाङ्गता भएका महिलाहरूका सवालमा प्रमाण, अध्ययन, सन्दर्भ-सामग्री, तथ्याङ्क आदिको अभावलाई स्वीकार्दै सरकारले योजना र नीतिहरूमा यस विषयमा कार्यक्रमहरू अनिवार्यरूपमा ल्याउनु पर्ने ।

६. साधन-स्रोतको कमी र व्यावसायिक सिपको अभावमा अपाङ्गता भएका महिलाहरू आर्थिक गतिविधिमा पछाडि पारिएका छन् । तसर्थ हामी सम्बन्धित सरकारहरूसँग जोखिममा रहेका समूहरूसँग सम्बन्धित गरिबी निवारण रणनीति र योजनाहरूमा अपाङ्गता भएका महिलाहरूलाई समेट्न सशक्त माग गछौँ ।

७. सरकारले विभिन्न अन्तर्राष्ट्रिय महासन्धिहरू, जस्तै : अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धि, बाल अधिकारसम्बन्धी महासन्धि, महिलाहरूमाथि हुने विभेदहरूविरूद्धको महासन्धिलगायत इन्च्योन रणनीतिमा प्रतिबद्धता जनाएको भए पनि यिनिहरूको प्रभावकारी कार्यान्वयन नभएको हुनाले सम्बन्धित सरकारहरूले यस्ता महासन्धिहरूलाई घरेलुकरण गर्नु पर्ने ।

८. अपाङ्गता भएका महिलाहरूले प्रजनन् स्वास्थ्यको अधिकार उपयोग गर्न विभिन्न कठिनाइहरूको सामना गर्नु परिरहेको र उनीहरूले प्रशुति वा



प्रशवको अवस्थामा पाउनु पर्ने विशेष हेरचाह पाउन नसकिरहेको तथ्यलाई मध्यनजर गर्दै सम्बन्धित सरकार र सरोकारवालाहरूले अस्पताल तथा स्वास्थ्य केन्द्रहरूमा त्यस्तो अवस्थाका अपाङ्गता भएका महिलाहरूलाई पहुँचयुक्त भौतिक संरचना, उपयुक्त अनुकूलतालगायत विशेष हेरचाह र सहयोगको अनिवार्य व्यवस्था गर्नुपर्ने ।

९. अपाङ्गता भएका महिलाहरूको अपाङ्गताको विविधता र यसको गम्भीरताका आधारमा प्राथमिकता क्रममा राखी समावेशीकरण गर्न रणनीति अख्तियार गर्नु पर्ने ।

१०. अपाङ्गता भएका महिलाहरूको निरस र पट्यारलाग्दो जीवन र मनोरञ्जनात्मक गतिविधिहरूमा कम पहुँचलाई मध्यनजर गर्दै हरेक सम्बन्धित सरकारहरूले मनोरञ्जन, खेलकुद र फूर्सदका कार्यक्रमहरूलाई समावेशी बनाई उनीहरूको समान पहुँच सुनिश्चित गर्नु पर्ने ।

११. अपाङ्गता भएका महिलाहरूको शुद्ध पिउनेपानी तथा सरसफाइमा कम पहुँच रहेको तथ्यलाई उच्च प्राथमिकतामा राखी पानी आपूर्ति, शौचालय, सरसफाइसँग सम्बन्धित सबै संरचनाहरू अपाङ्गतामैत्री बनाउनु पर्ने ।

१२. मनोसामाजिक अपाङ्गता भएका महिलाहरू परिवार र समुदायबाट उपेक्षित हुने र उनीहरूलाई परित्याग गरिने अभ्यासहरूले गर्दा उनीहरू सडकमा आउनु पर्ने, यसले नकारात्मक सामाजिक परिणामहरू ल्याइरहेको छ । तसर्थ सम्बन्धित सबै सरकारहरूले यस्तो अवस्थामा रहेका महिलाहरूको पुनःस्थापना, पुनःएकीकरणलगायत उपलब्ध गराउनु पर्ने सबै स्वास्थ्य सेवाको व्यवस्था गरी उनीहरूको सम्मानपूर्ण जीवन सुनिश्चित गर्न आवश्यक कार्य गर्नुपर्ने ।

१३. बौद्धिक अपाङ्गता, अटिज्म, हेमोफिलिया, मस्कुलर डिस्ट्रोफी, डाउन सिन्ड्रोम र बहु–अपाङ्गता भएका बालबालिकाका आमाहरूले दैनिक सामना गर्नु पर्ने काममा जान नपाउने, परिवारका अन्य काममा ध्यान दिन नपाउने, सामाजिक सम्मान गुमाउनु पर्नेलगायत अन्य विभेदसमेतको सामना गर्नु पर्ने तथ्यलाई मध्यनजर गरी सम्बन्धित सरकारहरूले यस्तो अवस्थामा रहेका परिवार वा आमाहरूलाई उत्साह दिन वा उनीहरूले ब्यहोरिरहेको आर्थिक क्षतिको पूर्तिका लागि विशेष व्यवस्था गर्नु पर्ने ।

१४. अति अशक्त र पूर्ण अशक्त अपाङ्गता भएका महिलाहरूका लागि सहायक सामग्री र सहयोगी सेवाको अभाव भएको र त्यसका कारणले उनीहरूको पूर्ण र प्रभावकारी सहभागिता हुन नसकिरहेको तथ्यलाई मध्यनजर गरी सम्बन्धित सरकारहरूले समुदायस्तरमै सहायक सामग्री र सहयोगी सेवा उपलब्ध गराउने संयन्त्रहरूको विकास गर्नु पर्ने ।

१५. सांकेतिक भाषा तथा सांकेतिक भाषा दोभाषे, पर्याप्तरूपमा पहुँचयुक्त संरचना, ब्रेल सामग्री आदिको अभावमा अपाङ्गता भएका व्यक्तिहरू सूचनाको पहुँचबाट बञ्चित भएका छन् भन्ने तथ्यलाई महत्व दिंदै सबै सम्बन्धित सरकार र सरोकारवालाहरूले अपाङ्गता भएका व्यक्तिहरूका लागि पहुँचयुक्त सूचना प्रणाली, सांकेतिक भाषाको विकास तथा दोभाषे उत्पादनमा जोड दिनु पर्ने । •

# सञ्जाल निर्माण र क्षमता अभिवृद्धिका माध्यमबाट अपाङ्गता भएका महिलाहरूको अधिकार प्रवर्द्धनका लागि दक्षिण एसियाली सम्मेलनमा प्रस्तुत कार्यपत्र र प्रस्तोता

**(पहिलो दिन : २०७० असार ३० गते सोमवार)**

- A7: अपाङ्गता भएका व्यक्तिहरूको मानव अधिकार र CRPD मा भएको व्यवस्था र दक्षिण एसियाली अभ्यास : सुदर्शन सुवेदी
- A1: अपाङ्गता भएका व्यक्तिहरूमा व्याप्त लिङ्गका आधारमा हुने हिंसाको आधारभूत परिचय : मिष्ठी (बंगलादेश)
- A9: अपाङ्गता भएका महिलाका सम्बन्धमा नेपालमा हाल कायम कानुन तथा कार्यक्रम : टीका दाहाल
- A3: Issues of Women With Disabilities in the CRPD & development agenda including Incheon Strategy : मानिक (श्रीलङ्का)
- अपाङ्गता भएका महिलाका लागि मनोरञ्जनात्मक क्रियाकलाप : सृष्टि के.सी
- बहिरा महिला र बहिरा संस्कृति : कल्पना वज्राचार्य
- समावेशी विकास र समुदायमा आधारित पुनःस्थापना : डा. विष्णुमाया ढुङ्गाना
- अपाङ्गता भएका महिला र पँहुचयुक्त सरसफाइको महत्व : अमृता ज्ञवाली
- अपाङ्गता भएका महिलाका मुद्दालाई समग्र महिला अधिकारसम्बन्धी हुने पहलहरूमा मूल-प्रवाहीकरण गर्न : रमा ढकाल
- बौद्धिक अपाङ्गता र सहयोगी सेवाहरू : शिला थापा

**समूहगत कार्यपत्र प्रस्तुति**

१. अपाङ्गता भएका महिलाले परिवार, स्कुल-कलेज, कार्यालयमा र समाजमा भोग्नुपरेका विभिन्न प्रकारका दुर्व्यवहार र हिंसा।

२. अपाङ्गता भएका महिलाका प्रजनन् स्वास्थ्यसम्बन्धी अधिकार, अस्पताल, सेवा, सामाजिकपक्ष र नीति, कार्यक्रम तथा कानुन।

३. अपाङ्गता भएका महिलाको विवाह गर्न र परिवार शुरू गर्ने अधिकार (पारिवारिक धारणा, सामाजिक धारणा र नीति तथा व्यवहार)

४. अपाङ्गता भएका बच्चाका आमाले भोग्नु पर्ने चुनौती र व्यक्तिगत सहयोगीसम्बन्धी अधिकार (परिवार, समाज र संस्थागत धारणा र भविष्यको चिन्ता)

(दोस्रो दिन : २०७० असार ३१ गते, मंगलबार)

**कार्यपत्र प्रस्तुति**

- A8: अपाङ्गता भएका महिलाको मानव अधिकारको स्थिति (म्च्एक्ष) को समग्र प्रतिवेदनमा आधारित : वीरेन्द्रराज पोखरेल
- A2: अपाङ्गता भएका महिलाहरूको दक्षिण एसिया तथा विश्वव्यापी आन्दोलनको विकासक्रम : आबिया अक्रम, पाकिस्थान
- A10: अपाङ्गता भएका महिलाको अन्तर्राष्ट्रिय सँभालको आवश्यकता र आपसी सहयोग : निर्मला धिताल
- A4: अपाङ्गता भएका महिलाको मूलप्रवाहीकरण : लैङ्गिक धारणमा आधारित सहभागीतामूलक सामुदायिक विकास : भारतका प्रतिनिधि
- नेतृत्व विकास तथा राजनीतिक सहभागिता : दीपावली शर्मा
- अपाङ्गता भएका महिलामाथिको बहु-विभेद : प्रतिमा लामा
- अटिजम भएका बालबालिका र तिनको विकास : डा. सुनिता मलेखु
- सामाजिक, आर्थिक अधिकार र अपाङ्गता भएका महिला : तेजकुमारी तिवारी
- साइकोसोसल अपाङ्गता भएका महिलाको परित्याग तथा सामाजिक चुनौतीहरूको नतिजा : सुस्मिता अर्याल
- स्वावलम्बी जीवन जिउने अवधारणा र दक्षिण एसियामा रहेका अपाङ्गता भएका महिलाको आपसी सहयोगी समूह : विनीता शर्मा
- अपाङ्गता भएका महिलाका लागि प्रकोप न्यूनीकरणको पूर्वतयारी तथा सामुदायिक विकास : रामप्यारी कार्की
- जनजाति समुदाय र आन्तरिकरूपमा विस्थापित शरणार्थी समूहमा अपाङ्गता भएका महिलाः दावा शेर्पा



अधिकारसम्बन्धी महासन्धिको कार्यान्वयनमा विशेष जोड दिने प्रतिबद्धता जनाउँदै हाल यस विषयमा भइरहेका काम र गतिविधिका बारेमा संक्षेपमा जानकारीसमेत गराउनुभयो।

उद्घाटन कार्यक्रमको अध्यक्षता गर्दै सम्मेलनका संयोजकसमेत रहनुभएका राष्ट्रिय अपांग महासंघका महासचिव टीका दाहाले सम्पूर्ण सम्मेलनको आवश्यक किन ठानियो, दक्षिण एसियामा अपाङ्गता भएका महिलाको अवस्था र संजाल निर्माणको औचित्य र महत्वका बारेमा प्रमुख मन्तव्य (Key Note speech) प्रस्तुत गर्नुभयो।

सम्मेलनका विशेष अतिथिहरू राष्ट्रिय अपाङ्ग महासंघका अध्यक्ष सुदर्शनन सुवेदी, सीबीएमका प्रतिनिधि प्रकाश वाग्ले, एविलिस फाउन्डेसनका प्रतिनिधि एवं महासंघका पूर्व अध्यक्ष वीरेन्द्रराज पोखरेलले सम्मेलन आयोजना आफैँमा महत्वपूर्ण भएकाले त्यसको सफलताका लागि शुभकामना व्यक्त गर्नुभयो।

नेपाल अपांग महिला संघ, राष्ट्रिय शारीरिक अपांग संघ, आइएल सेन्टर, हेमोफेलिया सोसाइटी, बहिरा महासंघ, मेन्टल हेल्थ फाउण्डेसन, नेपाल अपांग समाजलगायत डिपिओजका प्रमुखहरूले पनि आ–आफ्ना मन्तव्यसहित सम्मेलनको सफलताको कामना गर्नुभयो।

एविलिस फाउन्डेसनका पोखरेलले सम्पूर्ण सम्मेलनका बारेमा जानकारी गराउनुभएको उद्घाटन सत्रको संचालन निर्मला धितालले गर्नुभएको थियो भने रामप्यारी कार्कीले अतिथि एवं सहभागीमा र धन्यवाद ज्ञापन गर्नुभयो।

सम्मेलनको दोस्रो दिन निर्मला धिताल, प्रतिमा गुरूग र सृष्टि के.सी रहनु भएको ३ सदस्यीय घोषणपत्र तयारी समितिले तयार गरेको १५ बुंदे घोषणपत्र जारी गरियो। त्यसैगरी संजाल निर्माण गर्ने औपचारिक घोषणासहित नेपालमा सचिवालय रहने गरी ९ सदस्यीय समितिसमेत गठन भयो, जसमा नेपालबाट २ र भारत, पाकिस्थान, श्रीलंका, बंगलादेश, अफगास्थिान, भुटान, माल्दिभ्सका एक/एक जना रहेका छन्। उपस्थित हुन नसकेका देशका हकमा पुनः जानकारी गराई मनोनीत गरिने र अध्यक्षलगायत पदीय जिम्मेवारी निर्धारणको काम अर्को बैठकबाट सम्पन्न गर्ने सहमति भएको छ। सम्मेलनमा भारतका शुभरन राज, पाकिस्थान अविया अक्रम, बंगलादेशका मिस्ठी र रानी, श्रीलंका मानिकसमेतको प्रतिनिधित्व रहेको सम्मेलनको समापन समारोहमा राष्ट्रिय अपांग महासंघ–नेपालका अध्यक्ष सुदर्शनन सुवेदीले सहभागीहरूलाई प्रमाणपत्र वितरण गर्नुभयो।

•



# हाम्रा उपलब्धि, प्रयास र भाविष्यको बाटो

■ **सुदर्शन सुवेदी**, केन्द्रीय अध्यक्ष, राष्ट्रिय अपाङ्गता महासंघ-नेपाल

राष्ट्रिय अपाङ्गता महासंघ-नेपालले अपाङ्गता भएका व्यक्तिहरू पनि अधिकारका धारक हुन्, उनीहरू नागरिक हुन्, विकास प्रक्रियाका समान साझेदार र राज्यका स्रोत-साधनका समान हिस्सेदार हुन् भन्ने कुरालाई आत्मसात गर्दै आएको छ। महासंघ दुई दशकदेखि समाजमा अपाङ्गता भएका व्यक्तिका हक अधिकार संरक्षण र प्रवर्द्धनसहित उनीहरूको समावेशीकरण र सशक्तीकरणमा निरन्तर क्रियाशील संस्था हो। अपाङ्गता भएका व्यक्तिहरूलाई देशव्यापीरूपमा संगठित गर्न र उनीहरूका सवाललाई दरिलोरूपमा उठाउने उद्देश्यले वीस वर्ष अघि यस क्षेत्रमा अग्रणीरूपमा योगदान गरिरहेका सात वटा संस्थाको सक्रियतामा महासंघको जन्म भएको हो। यस क्षेत्रमा काम गर्ने विभिन्न संस्थाहरूको सांगठनिक प्रयासबाट गठन भएको संस्था भएकाले पनि यसको गरिमा र महत्व अझ ठूलो छ।

राष्ट्रिय अपाङ्गता महासंघ-नेपाल देशभरि छरिएर रहेका अपाङ्गता भएका व्यक्ति, तिनका संस्था र यस क्षेत्रका सबै सरोकारवालाको साझा चौतारी र आस्थाको धरोहर बनेको छ। महासंघ आज जुन स्थानमा छ, त्यसका पछाडि निसंदेह यससँग आवद्ध सदस्य संस्थाहरूको निरन्तर साथ, सहकार्य, सहयोग र सद्भावकै कारण

नै रहेको छ। यसबाहेक यस क्षेत्रमा काम गर्ने अन्य विभिन्न संस्था र निकायको पनि योगदान अत्यन्तै सराहनीय रहेको छ। महासंघको विकास र यसले उठाउने सवालहरूमा साथ दिई सधैं संजिवनीको बुटी भरिदिने साझेदार संस्थाहरूको भूमिकालाई हामी कहिल्यै बिर्सन सक्दैनौं।

संस्थाको विकास पनि व्यक्तिको विकास जस्तै हुँदोरहेछ। आज महासंघ बाल्यावस्था र किशोरावस्था पारगरी एउटा जवान वीस वर्षे युवा उमेरमा प्रवेश गरेको छ। यस अवधिसम्म आइपुग्दा नेपालमा अपाङ्गता भएका व्यक्तिहरूका अधिकार संरक्षणमा केही राम्रा र दूरगामी प्रभाव पार्ने काम भएका छन्। त्यस्ता काममा यस संस्थाले आफ्ना सदस्य संस्था र सरोकारवालाको साथ लिएर आफ्नो बुताले भ्याएसम्म योगदान गरेको छ भने धरै कुरा सिकेको पनि छ।

स्थापनाकालदेखि आजसम्मको अपाङ्गता अधिकार आन्दोलनको यात्रामा कयौं दुःख-सुखका क्षण आए तर यो संस्थाले कहिल्यै पनि विश्राम लिएको छैन। काम गर्ने र सिक्नेक्रममा पर्याप्त आलोचना, समालोचना, प्रशंसा, लान्छना, अवरोध र सहयोग, सबै पाएको यस संस्थाले आफ्नो उद्देश्यलाई अझ स्पष्ट, फराकिलो र ठोस बनाउँदै लैजाने प्रयास गरेको छ। महासंघले आफ्ना सदस्य संस्थाहरूको योगदान, काम र सहयोगलाई उच्च मूल्याङ्कन र सम्मान गर्नुपर्छ किनभने सदस्य संस्थाहरूको परिचालन नै महासंघको मूल दर्शन हो। यसको सम्पूर्ण अस्तित्व सदस्य संस्थाहरूसँग जोडिएको छ। सदस्य संस्थाहरूलाई सबल तुल्याउनु यसको दायित्व हो भने उनीहरूको कामलाई प्रवर्द्धन गर्न र यसमा आफ्नो पूर्ण अपनत्व लिने जिम्मेवारी पनि हो।

हामी सबैलाई थाहा छ, तुलनात्मकरूपमा जे-जति अधिकार र सेवा-सुविधा आज हामीले पाउनु पर्ने हो, त्यो पाएका छैनौँ र जे-जति पाएका छौँ, त्यो पर्याप्त छैन। तर सकारात्मक र आशावादी भएर सोच्दा अर्को सत्य के पनि हो भने देशको सामाजिक, आर्थिक, राजनीतिक अवस्था, चेतनाको स्तर, देशले समय समयमा भोगेका द्वन्द्व, हामीभित्रका आफ्नै अन्योल र अस्थिर राजनीतिका पीडाबीच यो दुई दशकमा जे जति प्राप्त गर्यौँ ती कम महत्वका भने पक्कै छैनन्। यसमा सदस्य संस्था, नागरिक समाज, अपाङ्गता क्षेत्रमा काम गर्ने अन्य सरोकारवाला, साझेदार निकाय, महासंघका क्षेत्रीय तथा जिल्ला संरचना, नेपाल सरकारका निकाय, मानव अधिकारकर्मी, अपाङ्गता अधिकारकर्मी, सञ्चार माध्यम, अपाङ्गता भएका व्यक्तिका अभिभावकका संस्था र सञ्जाल, निजीक्षेत्रको सहयोग एवं योगदान रहेको छ। उहाँहरू सबै मुरी मुरी धन्यवादका पात्र हुनुहुन्छ।

महासंघ आजसम्म भएका सबै उपलब्धिलाई सबैसँग बाड्न चाहन्छ।

## १. महासंघको वर्तमान संस्थागत अवस्था

राष्ट्रिय अपाङ्गता महासंघ-नेपालको वर्तमान संस्थागत अवस्थालाई हेर्ने हो भने हामी धेरै कुरामा गर्व गर्न सक्ने अवस्थामा छौँ। महासंघको यो संस्थागत उपलब्धिको श्रेय महासंघमा हालसम्म काम गरेका सबै कार्यसमिति, क्षेत्रीय समिति, जिल्ला संरचनाहरू र यस संरचनाभित्र रहेर काम गरिसकेका र गरिरहेका सबै कर्मचारी, स्वयंसेवक, सल्लाहकार र विज्ञहरूलाई जान्छ। विद्यमान संस्थागत उपलब्धिलाई बुँदागत रूपमा यसरी हेर्न सकिन्छ :

**क) देशव्यापी संजाल विस्तार र नीतिगत व्यवस्था**

विक्रम संवत् २०५० सालमा जम्मा सात वटा संस्थाबाट सुरू भएको महासंघ अहिले ७४ जिल्लामा फैलिएर तीन सय सदस्य संस्थाहरूको छाता संस्था (अभिभावक) बनिसकेको छ। यसले पाँचै विकास क्षेत्रमा क्षेत्रीय कार्यालय र १५ जिल्लामा जिल्ला कार्यसमिति स्थापना गरिसकेको छ। केन्द्र र जिल्लामा गरी ४९ कर्मचारी यसको संरचनाभित्र बसेर काम गर्छन् भने झण्डै ५० हजार अपाङ्गता भएका व्यक्ति प्रत्यक्षरूपमा यसका सदस्य संस्थामार्फत् यसमा जोडिएका छन्। कार्यरत कर्मचारीमध्ये ९० प्रतिशत अपाङ्गता भएका व्यक्तिहरू छन्, जसले समाजलाई अपाङ्गता भएका व्यक्तिहरू अन्यसरह कसरी उत्पादनशील भएर काम गर्न सक्छन् भन्ने कुराको नमूनासमेत प्रस्तुत गरेको छ।

२०५० सालमा एकमात्र दस्तावेजको रूपमा संस्थाको एउटा विधान लिएर यात्रामा अगाडि बढेको महासंघसँग आज कर्मचारी प्रशासन नियमावली, आर्थिक नियमावली, पाँच वर्षे रणनीति, बाल संरक्षण नीति, लैंगिक नीति, सञ्चार रणनीतिहरू समेत छन्। महासंघले आफ्नो विधानलाई बढीभन्दा बढी समावेशी बनाउने अथक प्रयास गरेको छ। समय र सदस्य संस्थाका माग अनुसार आफ्नो विधान र संस्थाका नीतिलाई अझ ठोस, सबल र प्रभावकारी बनाउन खुला पनि छ। आगामि केही वर्ष महासंघले आफ्नो सुशासनको अभ्यास र कार्यप्रणालीलाई सकेसम्म सबल, व्यावसायिक र दरिलो बनाउने प्रयास गर्नेछ, जसका लागि सुशासनसम्बन्धी छुट्टै नीति निर्माण गर्ने काम भइरहेको छ। महासंघ आफ्नो लक्ष्य, उद्देश्य र कार्यदिशामा स्पस्ट रही कत्ति पनि बिचलित नभई काम गर्नका लागि मुख्य आधारका रूपमा पाँच



वर्षे रणनीति बनाएको छ।

**ख) साझेदारी विकास**

बीस वर्षको यात्रामा महासंघले विभिन्न सवालमा विभिन्न राष्ट्रिय तथा अन्तर्राष्ट्रिय साझेदारसँग काम गर्ने अवसर पायो। कसैसँग छोटो अवधिको त कसैसँग लामो अवधिको साझेदारी रह्यो। हरेक साझेदारीले अपाङ्गता अधिकार आन्दोलनमा कहीँ न कहीँ धेरै थोरै इँटा थप्ने काम गरेको छ। युनिसेफले महासंघलाई प्रसव एवं बाल्यकालमा सहयोग गऱ्यो। एफ.एफ.ओ. नर्वे, डी.पी.ओ.डी. डेनमार्क, नेपाल सरकार महिला बालबालिका तथा समाजकल्याण मन्त्रालय र ह्याण्डिक्याप इन्टरनेशनलले हुर्कन, फैलन र स्थापित हुन सघाए। हाल महासंघसँग सहकार्य गर्ने साझेदार संस्थाहरूमा नेपाल सरकार महिला बालबालिका तथा समाज कल्याण मन्त्रालय, डि.पी.ओ.डी. डेनमार्क, एफ.एफ.ओ. नर्वे, आइफेस, डी.आर.पी.आई., ह्याण्डिक्याप इन्टरनेशनल, करूणा फाउन्डेसन, युनिसेफ, एन.एल.आर. र प्लान नेपाल रहेका छन्।

**ग) राष्ट्रिय र अन्तर्राष्ट्रिय प्रतिनिधित्व**

महासंघ अपाङ्गता भएका व्यक्तिहरूको अन्तर्राष्ट्रिय परिषद्को सदस्य हो, जसलाई डी.पी.आई. नेपाल पनि भनिन्छ। यसका साथै यो डी.पी.आई कै एसिया प्रशान्त क्षेत्रको उपाध्यक्ष र दक्षिण एसियाको अध्यक्षसमेत रहेको छ। यसैगरी संयुक्त राष्ट्रसंघ आर्थिक समाजिक परिषद्को एसिया प्रशान्त क्षेत्रका लागि प्रवर्द्धनकर्ताको उपाधि पनि प्राप्त गर्न सफल भएको छ, जुन हाम्रा लागि गर्वको कुरा हो। राज्यका विभिन्न निर्णय निर्माण तहमा र विशेष गरेर नीति निर्माण गर्ने तहमा महासंघ आफ्नो प्रतिनिधित्व स्थापित गर्न चाहन्छ। देशको सामाजिक, राजनीतिक परिस्थिति, सरकार र राजनीतिक दलको अपाङ्गता भएका व्यक्तिहरू प्रतिको दयामुखी सोच र हाम्रो आफ्नै दरिलो सांगठित प्रयासको अभावका कारण विभिन्न नीति निर्माण तहमा हामीले आशा गरे अनुरूप प्रतिनिधित्व हासिल गर्न नसके पनि केही कुरा भने पक्कै पाएका छौँ। हाल राष्ट्रिय अपाङ्गता महासंघ-नेपाल कानुन सुधार आयोगको अपाङ्गतासम्बन्धी विभेदकारी कानूनहरूको पुनरावलोकन समितिको सदस्य, विशेष शिक्षा परिषद्को सदस्य, प्रधानमन्त्रीको अध्यक्षतामा रहेको प्रधानमन्त्रीको सल्लाहाकार समिति डेक्समा सदस्य, राष्ट्रिय विकास परिषद्को आमन्त्रित सदस्य रहेको छ। जिल्लामा हाम्रा सदस्य संस्थाहरूले पनि जिल्लास्तरमा सरकारले गठन गरेका जिल्ला छात्रवृत्ति वितरण समिति, परिचयपत्र वितरण समिति, अपाङ्गतासम्बन्धी जिल्ला समन्वय समिति आदिमा प्रतिनिधित्व गर्दै आएका छन्।

**घ) परिभाषित परिकल्पना (Vision), धेय, लक्ष, उद्देश्य र रणनीति**

महासंघको दीर्घकालीन परिदृश्य (Vision) परिभाषित छ। हामी हाम्रो सोच, उद्देश्य र रणनीतिमा स्पष्ट छौँ। राष्ट्रिय अपाङ्गता महासंघ-नेपालको कार्यप्रणाली र संस्थागत संरचना परिभाषित छ। संस्थाभित्र कार्यरत पदाधिकारी र कर्मचारीका अधिकार र जिम्मेवारी परिभाषित छन्। हामीलाई हाम्रा सबल पक्ष, कमजोर पक्ष, चुनौती र अवसरहरू थाहा छन्। तिनलाई हामीले दस्तावेजमा उतारेका पनि छौँ। हामी सामूहिक निर्णय गर्छौँ। त्यस्ता निर्णयको सकेसम्म प्रभावकारी कार्यान्वयन गर्ने प्रयास गर्छौँ। हामी हाम्रा आदर्श, मूल्य, मान्यता एवं रणनीतिसँग नमिल्ने कार्यक्रम र साझेदारी स्वीकार्दैनौँ। हामी हाम्रा नीति र रणानीति सदस्य संस्थाहरूसँगै

बसेर सहभागितामूलक र प्रतिनिधिमूलक पद्धतिबाट निर्माण गर्छौं ।

## २. अपाङ्गता अधिकार प्रवर्द्धनमा महासंघका प्रयासबाट प्राप्त उपलब्धि

यहाँ "महासंघका प्रयास" भन्ने शब्दले कसैलाई भृकुटीमण्डपको एउटा कार्यालयमा रहने मान्छेहरूको मात्र प्रयास हो भन्ने भ्रम नपरोस् । महासंघले आफ्ना काम र उपलब्धिमा सदस्य संस्थाको स्वामित्व र साथ ग्रहण गर्न सकेन भने त्यो कदापि महासंघले हासिल गरेको उपलब्धि हुनसक्दैन । तसर्थ जुन जुन उपलब्धिमा महासंघले आफ्नो स्वामित्व वा योगदान देखाउन खोज्छ, त्यहाँ सदस्य संस्थाहरूको स्वामित्व स्वभाविकरूपमा जोडिनुपर्छ । महासंघले सदस्य संस्थाहरूमार्फत उठेका अपाङ्गता अधिकारका साझा सवालहरूलाई मात्र नेतृत्व गरेन समय समयमा सदस्य संस्थाले नेतृत्व गरेका वर्गीय र स्थानीय सवालहरूमा पनि आफ्नो सक्दो योगदान दिएको छ । महासंघका विभिन्न कालखण्डमा निर्वाचित हरेक कार्यसमितिले केही न केही नयाँ र महत्वपूर्ण उपलब्धि हासिल गर्ने प्रयास गरेका छन् । सँग सँगै पूर्व उपलब्धिहरूलाई संस्थागत र दिगो बनाउने पनि सक्दो प्रयास गरेका छन्, जुन लोक्तान्त्रिक अभ्यास पनि हो । तसर्थ यहाँ हाम्रा संयुक्त प्रयासले अपाङ्गताका क्षेत्रमा हासिल केही उपलब्धिलाई बुँदागत रूपमा एकपटक सरसर्ती छोटोरूपमा राख्नु म सान्दर्भिक ठान्दछु :

- अपाङ्गता संरक्षण तथा कल्याण नियमावली, २०५१ को निर्माण तथा आंशिक भए पनि कार्यान्वयन,
- २०५७ सालदेखि नेपाल सरकारमार्फत अपाङ्गता भएका व्यक्तिहरूलाई परिचयपत्र उपलब्ध गराउने व्यवस्थाको सुरूवात,
- नेपाल सरकारले रातो क्िताबमार्फत अपाङ्गताका क्षेत्रलाई बजेट विनियोजन,
- विशेष शिक्षा नीति, २०५३ को निर्माण र कार्यान्वयन,
- सी.बी.आर. कार्यक्रमका लागि बजेट विनियोजनको थालनी,
- अपाङ्गतासम्बन्धी राष्ट्रिय नीति तथा कार्ययोजना, २०६३ निर्माण र कार्यान्वयन,
- अपाङ्गताको नयाँ परिभाषा तथा वर्गीकरण, २०६३ निर्माण र कार्यान्वयन,
- परिचयपत्र वितरण निर्देशिका, २०६५ निर्माण र कार्यान्वयन,
- निजामति सेवामा अपाङ्गता भएका व्यक्तिहरूका लागि ५ प्रतिशत आरक्षणको व्यवस्था,
- स्थानीय निकायमार्फत अपाङ्गता क्षेत्रमा बजेट विनियोजनको सुरूवात,
- अपाङ्गता भएका व्यक्तिहरूको संविधानसभामा प्रतिनिधित्व,
- अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धि, २००६ नेपाल सरकारबाट हस्ताक्षर गरी अनुमोदन गारउने काम,
- अपाङ्गता संरक्षण तथा कल्याण ऐनको घरेलुकरणको सुरूवात ।

यसबाहेक केही उपलब्धि यस्ता छन्, जसमा महासंघको भन्दा पनि धेरै योगदान यसका सदस्य संस्थाहरूको रहेको छ । जस्तै : बहिराहरूको सांकेतिक भाषाको विकास र उनीहरूको शिक्षामा पहुँच बढाउने, दृष्टिविहीन व्यक्तिहरूलाई शिक्षा तथा रोजगारीमा पहुँच स्थापित गर्ने, अपाङ्गता भएका व्यक्तिहरूको निःशुल्क शिक्षा, अपाङ्गता भएका महिलाहरूका आवाज र सवाललाई राष्ट्रियस्तरमा स्थापित गर्न र उनीहरूलाई सशक्त गर्ने, शारीरिक अपाङ्गता भएका व्यक्तिहरूका विशेष सवालहरूलाई स्थापित गर्ने र भौतिक पहुँचका सवाललाई समाजमा उजागर गर्ने, बौद्धिक अपाङ्गता, मानसिक अपाङ्गता र अटिज्म प्रभावित व्यक्तिहरूका सवाललाई समाजमा उजागर गर्ने र महासंघलाई त्यसतर्फ डोऱ्याउने, अति अशक्त र पूर्ण अशक्त अपाङ्गता भएका व्यक्तिका विशेष सवाल र 'इन्डिपेन्डेन्ट लिभिङ' को अवधारणलाई नेपालमा प्रचार गर्ने र स्थापित गर्ने, अपाङ्गता भएका व्यक्तिका मानव अधिकारका सवालमा राज्यको ध्यानाकर्षण गराउने जस्ता काममा राष्ट्रियस्तरमा काम गर्ने सदस्य संस्थाहरूको योगदान सराहनीय छ, जसमा महासंघ आफ्ना सदस्य संस्थाहरूप्रति गर्व गर्छ ।

## ३. २०६८ सालपछिका थप उपलब्धि र राम्रा प्रयास

विराटनगर महाधिवेशनबाट निर्वाचित वर्तमान कार्यमितिले आफ्ना सबै नीति एवं कार्यक्रम कार्यान्वयन गर्न सदस्य संस्थाहरूको सुझावलाई सधैं ग्रहण गर्दै आएको छ । हरेक सवालमा साधन र स्रोतले भ्याएसम्म र सकेसम्म सदस्य संस्थाका साथै सरोकारवालाहरूको साथ लिएर काम गर्ने प्रयास हामीले गरेका छौं । संस्थाका काम कार्बाही अझै परिणाममुखी र व्यवस्थित बनाउने हाम्रो

प्रयास जारी छ। राष्ट्रिय अपाङ्गता महासंघ–नेपालले पछिल्लो अवधिमा आफ्ना सदस्य संस्थासँगको संयुक्त प्रयासमा निरन्तर गरेको वकालतका कारण लोकसेवा आयोगले गर्ने विज्ञापनमा प्रवेशमा अपाङ्गता भएका व्यक्तिहरूको उमेरको हद ३५ बाट ४० वर्ष पुऱ्याउन सफलता मिलेको छ। अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धि, २००६ लाई घरेलुकरण गर्ने क्रममा पुनर्लेखन गर्न सुरु गरिएको अपाङ्गता संरक्षण तथा कल्याण ऐन, २०३९ को मस्यौदालाई पूर्णता दिई व्यवस्थापिका संसद्बाट पारित गर्न आवश्यक पर्ने सैद्धान्तिक सहमति लिने प्रक्रिया अगाडि बढेको छ। यसबाहेक अन्य केही नयाँ उपलब्धिहरू र राम्रा



प्रयासलाई बुँदागतरूपमा यहाँ प्रस्तुत गर्नु अझ सान्दर्भिक ठानेको छु :

- सीआरपीडीको धारा ९ लाई कार्यान्वयन गराई भौतिक संरचना तथा सञ्चार सेवामा अपाङ्गता भएका व्यक्तिहरूको पहुँच स्थापित गराउन नेपाल सरकार मन्त्री परिषद्बाट अपाङ्गता भएका व्यक्तिहरूको भौतिक संरचना तथा सञ्चार सेवामा पहुँचसम्बन्धी निर्देशिका, २०३९ पारित गराउन महासंघको पहल महत्वपूर्ण रह्यो। यस निर्देशिकाका कारण नयाँ बन्ने भौतिक संरचना अपाङ्गतामैत्री बन्नेक्रम सुरू भएको छ।

- विशेष शिक्षा नीति, २०५३ लाई समय अनुकूल बनाई परिमार्जन गर्न मस्यौदाको लेखनकार्य जारी रहेको छ। यसमा महासंघले सरकारलाई सहयोगका साथै आवश्यक खवरदारीसमेत गरिरहेको छ।

- हाल संशोधनका क्रममा रहेको स्थानीय स्वयत शासन ऐन, २०५५ मा स्थानीय स्रोत परिचालनमा अपाङ्गता भएका व्यक्तिहरूको सहभागीताका कुरा समेट्न महासंघ सफल भएको छ।

- अपाङ्गता भएका व्यक्तिहरूका लागि रोजगारीका अवसर बढाउन लोकसेवा आयोगले लिने परीक्षाका लागि तयारी कक्षा सञ्चालन सुरूवात जस्ता काम नेपाल सरकारबाट गराउन महासंघको वर्तमान नेतृत्व सफल भएको छ। यसलाई निरन्तरता दिन पहल गर्ने कुरामा महासंघ दृढ छ।

- अपाङ्गतासम्बन्धी राष्ट्रिय नीति तथा कार्ययोजनालाई महिला, बालबालिका तथा समाजकल्याण मन्त्रालयको नेतृत्व र महासंघको प्रत्यक्ष सहजीकरण र समन्वयमा सी.आर.पी.डी. अनुकूल पुनरावलोकन गर्न सुरू गरिएको छ।

- आर्थिक वर्ष २०७१/०७२ को बजेटमा समाजिक सुरक्षा भत्तामा थप सुधार भएको छ। यो सुधार हामीले माग गरे अनुसार नभएको भए पनि आंशिकरूपमा सकारात्मक मान्न सकिन्छ।

- महासंघले अपाङ्गताको परिभाषा र वर्गीकरणलाई सीआरपीडीको भावना अनुरूप र अन्तर्राष्ट्रिय मापदण्ड अनुसार अझ वैज्ञानिक एवं समयसापेक्ष बनाउने प्रयास थालेको छ।

- सीआरपीडीको छायाँ प्रतिवेदन निर्माणका लागि सदस्य संस्थालगायत महासंघले आफ्नै क्षमता विकासका प्रयास पनि सुरू गरेको छ।

- संविधानसभामा सहभागिताका लागि लामो आन्दोलनपछि सरकारसँगको सम्झौता भएको छ। त्यस सम्झौता कार्यान्वयनका लागि हाल निरन्तर पहल भइरहेका छन्।

- सन् २०१३ र २०१४ मा गरिएको वृहत रोजगार मेलाले रोजगारदाताहरूमा चेतना बढाउनमा ठूलो सहयोग गरेको छ भने अपाङ्गता भएका केहीले रोजगारीसमेत पाउन सफल भएका छन्। नेपालमा अपाङ्गता भएका व्यक्तिहरूको रोजगारी प्रवर्द्धनका लागि डी.आर.पी.आई. सँग महासंघले अध्ययन र अनुसन्धानमा आधारित पाँच वर्षे परियोजनामा समेत हस्ताक्षर गरिसकेको छ। त्यसैगरी ह्याण्डिक्याप इन्टरनेशनलसँगको साझेदारीमा हाल अपाङ्गता भएका व्यक्तिहरूलाई विभिन्न जीवनयापनका क्रियाकलापमा समावेश गराउन महासंघले समन्वयकर्ताको भूमिका निर्वाह गरिरहेको छ।

- महासंघले अपाङ्गता क्षेत्रको बजेट नशाङ्कन गरेको छ भने यसको प्रतिवेदनका आधारमा आगामी दिनमा बजेटमा अपाङ्ताका सवालहरूलाई बढीभन्दा बढी कसरी समावेश गराउने भन्नेवारेमा रणनीति बनाउने

छ। यसको सफलताका लागि सदस्य संस्थाको सहयोग र साथ सबैभन्दा बढी महत्वपूर्ण हुनेछ।

- ख्यातिप्राप्त अन्तर्राष्ट्रिय अनुसन्धान कम्पनी साइनटेफ (SINTEF) मार्फत महासंघले नेपालमा अपाङ्गता भएका व्यक्तिहरूको जीवनस्तर अध्ययनको काम गराउने भएको छ। यसको लागि मुख्य समन्वयर्क्ताको रूपमा महासंघ रहनेछ। अध्ययनको काम २०१४ अगस्टबाट सुरू हुनेछ। यस कामले आगामी दिनमा अपाङ्गता भएका व्यक्तिहरूका अधिकारका सवाललाई अझ स्पष्टरूपमा राज्यका सामु उठान गर्न महासंघलाई प्रमाणमा आधारित दरिलो आधार प्राप्त हुनेछ।

## ५. आर्थिक पारदर्शिता र सुशासनका लागि महासंघले तयार गरेका थप नयाँ नीति

सुशासनले संस्थाको छविलाई उच्चमात्र राख्दैन सरोकारवाला, साझेदार निकाय, सदस्य संस्था र सरकारसँगको सम्बन्ध र विश्वासलाई पनि दरिलो बनाउँछ। पछिल्लो समयमा महासंघले सुशासनमा केही नयाँ थालनी गरेको छ। विशेष गरेर महासंघका गतिविधिसम्बन्धी सूचनामा सदस्य संस्थालगायत सरोकारवालाहरूको प्रत्यक्ष पहुँच पुगोस् भन्नका लागि राष्ट्रिय अपाङ्गता महासंघ-नेपालले आफ्नो आधिकारिक वेबसाइटलाई बढीभन्दा बढी सूचनामूलक बनाउने प्रयास गरिरहेको छ। यसमा सुधार आएको छ। यसै विषयलाई थप सबल बनाउन छुट्टै सञ्चार रणनीति पनि महासंघले निकट भविष्यमै लागू गर्दैछ। आर्थिक र प्रशासनिक पारदर्शितालाई अझ प्रभावकारी बनाउन गत वर्ष आर्थिक तथा प्रशासनिक नियमावलीमा थप संशोधन गरिएको छ। हाल निम्न नीति र रणनीति कार्यान्वयनमा रहेका छन भने सुशासनसम्बन्धी छुट्टै नीति बन्नेक्रममा रहेको छ।

- पाँच वर्षे रणनीति, २०१३-२०१७
- लैङ्गिक नीति, २०७०
- बाल संरक्षण नीति, २०७०
- विपद् व्यवस्थापन अधिवाचन रणनीति, २०७१

## ६. महासंघको दैनिक कार्यसम्पादनमा आएको परिवर्तन

राष्ट्रिय अपाङ्गता महासंघ-नेपालको कार्यालयमा आउने सेवाग्राही सकेसम्म निरास भएर फर्कनु नपरोस् भनी हरसम्भव प्रयास भइरहेको छ। यसका लागि सूचना तथा परामर्श केन्द्रमा थप सुधार गरिएको छ। टोल फ्रि टेलिफोन सेवाको समेत सुरूवात गरिएको छ। समग्र परियोजना र प्रशासनिक कामको मूल नेतृत्व प्रशासकीय व्यवस्थापकलाई दिइएको छ। त्यसभित्र पनि परियोजना विशेष अन्तर्गतका अधिकृतलाई आफू अन्तर्गतका परियोजनाहरूको कार्यान्वयनको पूर्ण नेतृत्व दिइएको छ। महासंघका कार्यहरू नियमित र समयमा सम्पादन होस् भनि वार्षिक, अर्धवार्षिक, त्रैमासिक, मासिक र साप्ताहिक कार्ययोजना तयार गरी कार्यान्वयन गरिँदै आएको छ।

## ७. सदस्य संस्थाहरूसँग साझेदारीको थालनी

महासंघले स्थानीयस्तरमा गर्नु पर्ने कार्यक्रमहरू सकेसम्म सदस्य संस्थासँगको प्रत्यक्ष संलग्नता र समन्वयमा गर्ने गरेको छ। २०६८ सालपछि प्रत्यक्ष साझेदारीमै कामहरू अगाडि बढाइएको छ। महासंघको क्ष्म्क सँगको साझेदारी अन्तर्गतको बजेटको ८० प्रतिशत हिस्सा सुदूरपश्चिम र मध्यपश्चिमका ६ वटा जिल्लामा आफ्ना सदस्य संस्थामार्फत परिचालन भइरहेको छ। युनिसेफसँगको साझेदारी अन्तर्गत १५ जिल्लामा सदस्य संस्थाहरूसँग मिलेर विभिन्न कार्यक्रम भइरहेका छन्। यसैगरी डीपीओडी डेनमार्कसँगको साझेदारी अन्तर्गतका जिल्लामा गर्नु पर्ने कार्यक्रम पनि १० जिल्लामा स्थानीय सदस्य संस्थाको प्रत्यक्ष संलग्नतामा जिल्ला च्याप्टरमार्फत सञ्चालन भइरहेका छन्। महासंघका परियोजना तयार गर्दा दुर्गम ग्रामीण र विकासको सुचकाङ्कमा तल रहेका जिल्लामा कार्यक्रम केन्द्रित गर्ने प्रयासको थालनी भएको छ।

## ८. आगामी पाँच वर्षका लागि महासंघका मुख्य एजेन्डा

कुनै परिवर्तन वा उपलब्धिको परिकल्पना गर्दा त्यस्ता परिवर्तन वा उपलब्धि हासिल गर्न कुन बाटो कसरी हिंड्ने भन्ने कुरा महत्पूर्ण हुन्छ। हुनत महासंघको पाँच वर्षे रणनीतिमा आगामी पाँच वर्षमा महासंघ कसरी अगाडि बढ्ने भन्नेबारेमा विस्तृत उल्लेख गरिएको छ। तर त्यसभित्र पनि अपाङ्गता भएका व्यक्तिहरूको अधिकारका लागि गरिने नीति निर्माण र कार्यान्वयनसम्बन्धी जन-वकालतका कामलाई आगामी केही वर्षसम्म सघनरूपमा अगाडि बढाउनु आवश्यक छ। तसर्थ आगामी दिनमा विशेष गरेर जन-वकालतका क्षेत्रमा महासंघले निम्न सवालमा केन्द्रित भई आफ्नो बाटो तय गर्नु पर्ने देखिएको छ।

- हाल अन्तिम मस्यौदाको रूपमा रहेको अपाङ्गता भएका व्यक्तिहरूको अधिकार तथा सुविधासम्बन्धी ऐनलाई व्यवस्थापिका संसद्‌बाट यथाशक्य छिटो पारित गराउन पहल गर्नु पर्ने,

- नयाँ ऐन अनुकूल अपाङ्गता संरक्षण तथा कल्याण नियमावली, २०५१ लाई संशोधन गरी समयसापेक्ष बनाउन पहल गर्नु पर्ने।

- हाल अपाङ्गता परिचयपत्र वितरणमा भएको वेथिति र दुरूपयोर्ग रोक्न यसको ढाँचा र सम्बन्धित निर्देशिकामा परिवर्तन गर्नेदेखि अपाङ्गताको परिभाषा र वर्गीकरणलाई समयसापेक्ष, समावेशी र वैज्ञानिक बनाउन पहल गर्नु पर्ने,

- अपाङ्गतासम्बनधी राष्ट्रिय नीति तथा कार्ययोजना, २०६३ कार्यान्वयन गर्न वकालत गर्दै यसलाई अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धि, २००६ र ऐन्चोन रणनीति २०१३-२०२२ अनुसार परिमार्जन गर्न पहल गर्नु पर्ने,

- अपाङ्गता भएका व्यक्तिहरूका सवाललाई विकासको सवालका रूपमा पहिचान गराई हाल उपलब्ध सेवा-सुविधालाई गाउँस्तरसम्म पुऱ्याउन उपयुक्त संयन्त्र निर्माण गर्न र बजेटमा वृद्धि गर्न सरकारसँग पहल गर्ने,

- स्थानीय सरकारका बजेट तथा कार्यक्रममा अपाङ्गता अधिकारका सवाललाई समेट्न स्थानीय विकास मन्त्रालयसँग विशेष पहल गर्ने,

- अपाङ्गता भएका व्यक्तिकहरूको भौतिक संरचना तथा सञ्चार सेवामा पहुँचसम्बन्धी निर्देशिका, २०६९ को प्रभावकारी कार्यान्वयन गराउन विशेष पहल गर्ने,

- नेपालको नयाँ संविधानमा अपाङ्गताका सवाल समावेश गराउन विशेष पहल गर्ने,

- पूर्ण अशक्त तथा अति अशक्त व्यक्तिहरूका लागि व्यक्तिगत सहयोगी निर्देशिका पारित गराई कार्यान्वयन गराउन आवश्यक पहल गर्नु पर्ने,

- विधान संशोधनमार्फत महासंघको संरचनामा महिला, अति अशक्त, मानसिक अपाङ्गता भएका, युवा र अन्य समेटिन नसकेका अपाङ्गता वर्गहरूको पहुँच स्थापित गर्ने,

- साधारणसभा र अधिवेशनलाई चुस्त र प्रभावकारी बनाउने,

- महासंघका स्थानीय संरचनाहरूलाई सदस्य संस्थाका अभिन्न मित्र र सहयोगीका रूपमा विकास गर्ने,

- महासंघको संरचनाभित्रको अनावश्यक खर्चको भार कम गर्न र व्यवस्थापनलाई छरितो बनाउने,

- सुशासनसम्बन्धी निर्देशिका लागू गर्न र सदस्य संस्थाहरूमा समेत सुशासन अभिवृद्धका लागि पहल गर्ने।

## ९. चुनौती र अवसर

कुनै पनि काम गर्दा साना ठूला चुनौती अवस्य आइपर्छन्। तर, त्यससँगै अवसरहरू पनि त्यतिकै हुन्छन्। उल्लेखित भावी सोच लिएर अगाडि बढ्दा बाटामा पनि धेरै चुनौती र अवसर छन्। चुनौतीहरूलाई पहिले नै पहिचान वा अनुमान गर्न सकियो भने यात्राका क्रममा त्यसलाई छल्न वा हटाउन सम्भव हुन्छ। महासंघले आफ्ना चुनौती र अवसरलाई पहिचान गरेको छ, जसलाई निम्न अनुसार उल्लेख गर्न सकिन्छ।

- राष्ट्रिय अपाङ्गता महासंघ-नेपालको विधानमा रहेका कमी-कमजोरीका कारण महासंघका क्षेत्रीय र जिल्लास्तरीय संरचनाका साथै सदस्य संस्थाबीच एक अर्काले गर्न काम र जिम्मेवारीहरूको बारेमा स्रोत परिचालन सम्बन्धमा बुझाइमा समस्या रहेको कारणले कतिपय ठाउँमा विवाद कायम रहेको।

- महासंघको काम, उपलब्धि र पहलहरूमा सदस्य संस्था र सरोकारवालाहरूको अझै चाहे जति स्वामित्व र अपनत्व कायम गर्न नसकिएको अवस्था छ।

- पैरवी र जन-वकालतलाई "साझा सवालमा महासंघको नेतृत्व र सबै वर्गको साथ र वर्गीय सवालमा सदस्य संस्थाको नेतृत्व र महासंघको साथ" भन्ने दर्शनबाट अगाडि बढाउन अझै चुनौतीपूर्ण रहेको,

- महासंघको आर्थिक स्रोत ९० प्रतिशत वाह्य स्रोतबाट र परियोजना अन्तर्गत धानिने हुनाले र आन्तरिक स्रोतमा अझै पनि दिगो हुन नसकिएका कारण परियोजना नहुँदाको अवस्थामा कर्मचारीलाई टिकाएर राख्न र लामो समयदेखि काम गरिरहेका कर्मचारीलाई थप सेवा-सुविधा एवं सहुलियत उपलब्ध गराउन अझै नसकिएको,

- अपाङ्गताका क्षेत्रमा काम गर्न सबैको साझा मञ्चको रूपमा महासंघलाई विकास गराउन अझै पनि धेरै काम गर्न बाँकी छ, जसका लागि संरचना, बुझाइ, नीति र रणनीतिहरूमा परिवर्तन आवश्यक छ।

- महासंघसँग सदस्य संस्थाका अपेक्षा ठूला र धेरै छन् भने त्यस अनुकूल महासंघको क्षमतामा विकास भएको छैन।

- महासंघको अधिवेशन र साधारणसभाहरू निकै खर्चिला हुनेगरेका छन्, जसलाई छरितो र मितव्ययी बनाउनु जरूरी छ।

- परियोजना नभएको अवस्थामा संस्था कसरी चलाउने भन्ने समस्या हुनेगरेको छ।

- अझै पनि सदस्य संस्थाले गर्ने काम र महासंघले गर्ने काममा दोहोरोपन र अन्योल रहनेगरेको र यताकदा विवाद पनि हुनेगरेको छ।

- अपाङ्गता भएका व्यक्तिहरूको अधिकार प्रवर्द्धन र स्थापनाका लागि राज्यलाई प्रभाव पार्न र दवाव दिन प्रभावकारी अभियानहरू चलाउन स्रोतको अभाव रहेको छ।

- समस्या उत्पादन, नकारात्मक सोच र विरोधलाई मात्र खेती बनाएर हिँड्ने प्रवृत्तिले पनि कहिले काहीँ काममा वाधा उत्पन्न हुनेगरेको अनि वातावरणमा अन्योल र धमिलोपन सिर्जना भई महासंघक लागि चुनौती बन्दै आएका छन्।

## अवसर

यति धेरै चुनौती रहे पनि हामीसँग केही यस्ता अवसर छन्, जसले राष्ट्रिय अपाङ्गता महासंघ-नेपाललाई आफ्ना भावी एजेन्डाहरूमा अगाडि बढ्न पक्कै सहयोग गर्नेछन्। तर ती अवसरलाई सबैले लिन सक्नुपर्छ। केही मुख्य अवसरलाई यहाँ उल्लेख गर्नु सान्दर्भिक हुनेछ :

- अपाङ्गता क्षेत्रमा काम गर्न विभिन्न साझेदार निकायको चासोमा वृद्धि भइरहेको छ।

- सरकारले अब विस्तारै अपाङ्गता क्षेत्रलाई दयाको भन्दा पनि दायित्वको रूपमा अंगिकार गर्दै आएको छ।

- सदस्य संस्थाहरूको क्षमतामा विकास हुँदै आएको छ र स्थानीयस्तरमा आवाज उठाउन सक्षम भएका छन्।

- अपाङ्गता क्षेत्रमा अध्ययन र अनुसंधानहरू बढ्दै छन्, जसले भोलिका योजना र रणनीतिहरूमा योगदान गर्नेछन्।

- निजी क्षेत्रले पनि यस क्षेत्रमा काम गर्न चासो देखाउन थालेको छ। यस अवसरलाई लिनसकियो भने अपाङ्गता भएका व्यक्तिको जीवनयापन र रोजगारीमा फड्को मार्न सकिन्छ।




- सीआरपीडीको अनुमोदन भइसकेको अवस्थाले महासंघका लागि अब अपाङ्गताको अधिकारमुखी अवधारणालाई समाजमा संस्थागत गर्न मार्गप्रशस्त भएको छ।

अन्त्यमा, महासंघ वीस वर्षे परिपक्व जवानीमा प्रवेश गरिसकेको हुनाले अब यस संस्थाभित्र व्यावसायिक्ताको विकास गर्नु जरूरी छ। अथवा, सरल भाषामा भन्दा यस वीस वर्षे जवानलाई अब गरिखान सक्ने बनाउनु पर्ने छ। त्यससँगै यसलाई बढीभन्दा बढी अभियानमुखी बनाउनु पर्ने पनि देखिन्छ। महासंघको नेतृत्व भनेको परिवर्तशील हुन्छ। चाहेर पनि कोही त्यहाँ सधैँ बसिरहन सक्दैन र त्यो हुनु जरूरी पनि होइन। महासंघमा नयाँ नेतृत्व अझै माझिएको, अनावश्यक विवादमा कम समय बिताउने र काममा बढी समय बिताउने, उर्जाशील, नवीन विचार र दर्शनहरूसहितको हुनु जरूरी छ। यसका लागि उर्जाशील र विचारशील युवा अपाङ्गता भएका समुदायबाट नेतृत्व विकास गर्न आगामी दिनमा महासंघले काम गर्नु पर्ने देखिन्छ। यसका लागि केही राम्रा काम अबका दिनमा अवश्य हुनेछन्। हरेक नेतृत्वले विगतमा भएका असल अभ्यासलाई निरन्तरता दिनसक्नु पर्छ र आफ्नो कार्यकालमा केही नयाँ र राम्रो दिन पनि सक्नु पर्छ। त्यति भएमात्र संस्थाले दिगो बाटो लिनसक्छ र संस्थागत आदर्शको विकास हुन्छ।

तसर्थ, साथी हो ! आऔँ अनि जुटौँ ! सबै एक भएर काम गरौँ र महासंघ वा यस क्षेत्रमा काम गर्ने प्रणका साथ उभिएका हामी सबैले मिलेर केही गर्दैछौँ भन्ने अनुभूति ती अपाङ्गता भएका व्यक्ति, जो अत्यन्त पीडा, विभेद र उपेक्षामा बाँचेका छन्, उनीहरूलाई गराउन सक्यौँ भनेमात्र पनि हामी सफल हुनेछौँ। महासंघ यसका लागि सबैसँग आशावादी छ। •

# सर्वोच्च अदालत, संयुक्त इजलास
## माननीय न्यायाधीश श्री ताहिर अली अन्सारी
## माननीय न्यायाधीश श्री कमलनारायण दास
## आदेश
068-WO-0188
## विषय : परमादेशसमेत ।

नेपाल अपाङ्ग मानव अधिकार केन्द्रको तर्फबाट एवं आफ्नो हकमा समेत बर्दिया जिल्ला कालिका गा.वि.स. वडा नं. ३, मयुरवस्ती स्थायी घर भई हाल काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ७ चावहिल सरस्वतीनगर बस्ने अधिवक्ता सुदर्शन सुवेदी … … … … … … … … … …१
भक्तपुर जिल्ला भक्तपुर नगरपालिका वडा नं. ६ बस्ने दीपेन्द्र शाक्य … … … … … … … … … १

निवेदक

विरूद्ध

नेपाल सरकार, प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय, सिंहदरबार काठमाडौं … … … … ..१
नेपाल सरकार, महिला, बालबालिका तथा समाज कल्याण मन्त्रालय, सिंहदरबार काठमाडौं..१
नेपाल सरकार, अर्थ मन्त्रालय, सिंहदरबार काठमाडौं… … … … … … … … … … … … … … … १
नेपाल सरकार, स्वास्थ्य तथा जनसत्त्या मन्त्रालय, सिंहदरबार काठमाडौं… . … … … … … … ..१
नेपाल सरकार, शिक्षा मन्त्रालय, केशरमहल काठमाडौं … … … … … … … … … … … … … १
नेपाल सरकार, स्थानीय विकास मन्त्रालय, पुल्चोक ललितपुर … … … … … … … … … … …१
राष्ट्रिय योजना आयोग, सिंहदरबार काठमाडौं … … … … … . … … … … …… … … … … … … १
व्यवस्थापिका संसद् सचिवालय, सिंहदरबार काठमाडौं … … … … … … … … … … … … … १

विपक्षी

नेपालको अन्तरिम संविधान, २०६३ को धारा, ३२ र १०७ (२) बमोजिम यस अदालतको क्षेत्राधिकारको प्रस्तुत रिट निवेदनसहितको संक्षिप्त तथ्य र ठहर यस प्रकार छ :

नेपाल अपाङ्ग मानव अधिकार केन्द्र, २०५६ सालमा जिल्ला प्रशासन कार्यालय काठमाडौंमा दर्ता भई अपाङ्गता भएका व्यक्तिहरूको नेतृत्वमा सञ्चालित गैरसरकारी संस्था हो। यस संस्थाले अपाङ्गता भएका व्यक्तिहरूको मानव अधिकार संरक्षण र संवर्धनका लागि निरन्तररूपमा क्रियाशील भई कार्य गर्दै आइरहेको र अपाङ्गता भएका व्यक्तिहरूको हक, अधिकार तथा मानव अधिकारको सवालमा सामाजिक जनचेतना, न्यायिक आवाज, वकालत तथा प्रवर्द्धनका कार्यहरू गर्दै आइरहेको छ।

रिट निवेदकमध्येको म दीपेन्द्र शाक्य आफू स्वयं पनि अति अशक्त अपाङ्गता भएको व्यक्ति हुँ। म आफू अति अशक्त अपाङ्गता भएको व्यक्ति भए तापनि आफ्नो र म जस्तै अन्य अपाङ्गता भएका व्यक्तिहरूको न्यायिक अधिकारका लागि आवाज उठाउँदै आएको छु। तसर्थ, अति अशक्त र बौद्धिक अपाङ्गता भएका व्यक्तिहरूको तर्फबाट निवेदन दायर गर्ने हकदैया हामी निवेदकहरूलाई रहे भएकै व्यहोरा निवेदन गर्दछौँ।

नेपालमा सुस्त मनःस्थिति (वौद्धिक अपाङ्गता भएका व्यक्तिहरू) र अति अशक्त अपाङ्गता भएका व्यक्तिहरूको जीवन दिन प्रतिदिन अत्यन्तै दयनीय बन्दै गइरहेको अवस्था छ। वौद्धिक अपाङ्गता र अति अशक्त अपाङ्गता भएका व्यक्तिहरूको बारेमा राष्ट्रका हरेक निकायले प्रदान गर्नुपर्ने सेवा सुविधाहरू प्रदान नगर्नु र सम्बन्धित निकायमा यस्ता व्यक्तिहरूको आवाज तथा माग पुर्‍याई दिने माध्यम नहुनु एवं स्वयं आफूमा पहुँच हुन नसक्नुको कारणले नेपालमा सुस्त मनःस्थिति (वौद्धिक अपाङ्गता भएका व्यक्तिहरू) र अति अशक्त अपाङ्गता भएका व्यक्तिहरूको जीवन दिन प्रतिदिन अत्यन्तै दयनीय बन्दै गएको छ भन्ने तथ्यमा दुईमत छैन।

अपाङ्गता संरक्षण तथा कल्याण नियमावली, २०५१ को नियम ८ ले अति अशक्त र वौद्धिक अपाङ्गता भएका व्यक्तिहरूलाई केन्द्रबिन्दु बनाई अपाङ्ग घरको स्थापना र सञ्चालन गरिने व्यवस्था गरेको छ। अशक्त र असहाय अपाङ्गहरूका लागि सुरक्षित आवासको व्यवस्था गर्न अपाङ्ग घर सञ्चालनमा ल्याउनु पर्ने भन्ने

कानूनी व्यवस्थाले म रिट निवेदक दीपेन्द्र शाक्य र म जस्ता अन्य अपाङ्गलाई घर परिवार एवं समाजबाट हुनसक्ने अपहेलनाको शिकारबाट मुक्ति दिलाई मानव भई मानवको रूपमा जीउनको लागि राज्यले आफ्नो नागरिकको जीउ-ज्यान, धनको सुरक्षा एवं संरक्षण दिने एक पवित्र उद्देश्य रहेको देखिन्छ। यसैगरी स्थानीय स्वायत्त शासन ऐनमा पनि अपाङ्गता भएका व्यक्तिहरूको तथ्याङ्क संकलन गर्ने, अपाङ्ग घर निर्माण गर्ने व्यवस्था गरेको छ। अपाङ्गता भएका व्यक्तिहरूको हक अधिकारको संरक्षण तथा कल्याणसम्बन्धी नियमावली, २०५१ लागू भए पनि कार्यान्वयनतर्फ निस्क्रियतुल्य छ।

नेपाल सरकारले अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी Convention on the Rights of Persons with Disabilities र Optional Protocol to the Convention on the Rights of Persons with Disabilities, २००६ लाई हस्ताक्षर गरी सो समेतबाट कानूनी अधिकार सिर्जना भएको छ।

नेपालमा विभिन्न संघ संस्थाहरूले गरेका अध्ययन अनुसन्धानबाट ६ लाखको सङ्ख्यामा बौद्धिक अपाङ्गता (सुस्त मनःस्थिति) र त्यति नै सत्यामा अति अशक्त अपाङ्गता रहेको भन्ने छ। वौद्धिक अपाङ्गता र अति अशक्त अपाङ्गता भएका व्यक्तिहरूको जीवन झन दिन प्रतिदिन दयनीय र चिन्ताजनक बन्दै गएको छ।

वौद्धिक अपाङ्गता भएका व्यक्ति र अति अशक्त अपाङ्गता भएका व्यक्तिहरूले सामान्य भत्ताबाहेक खास राहत प्राप्त गर्न नसकेको कारणले गर्दा कतिपय अपाङ्ग भएकाको दैनिक जीवन दयनीय अवस्थामा रहेको भन्ने तथ्य २०६६ भाद्र १६ गते कान्तिपुरको समाचारसमेतबाट प्रष्ट गर्दछ।

अतः विपक्षीहरूले आफ्नो संवैधानिक तथा कानूनी कर्तव्य पूरा नगरकोले अपाङ्गता भएका व्यक्तिहरूको नेपालको अन्तरिम संविधान, २०६३ को धारा १२ ले प्रदान गरेको सम्मानपूर्वक बाँच्न पाउने हक, समानताको हक, सामाजिक सुरक्षाको हकसमेत हनन हुनगई अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ को दफा ४, ५ र अपाङ्ग संरक्षण तथा कल्याण नियमावली, २०५१ को नियम ८ को विपरीत छ। अपाङ्ग व्यक्तिहरूको हक हित तथा सामाजिक सुरक्षासँग प्रत्यक्ष सरोकार तथा सम्बन्ध राख्ने कानून प्रदत्त अपाङ्ग संरक्षण तथा कल्याण नियमावली, २०५१ को नियम ८ अनुसार बेसहारा र कोही नभएका वा हकवाला वा संरक्षक भए पनि निजहरूबाट उपेक्षित भएका तथा गरिएका अति अशक्त र वौद्धिक अपाङ्गता भएका व्यक्तिहरूलाई सुरक्षित र सामुदायिक आवासीय भवन निर्माण गरी महिला र पुरूषलाई छुट्टाछुट्टै आवासीय भवनमा राख्ने उचित व्यवस्था गरी कार्यान्वयनमा ल्याउनु, अति अशक्त र वौद्धिक अपाङ्गता भएका व्यक्तिहरूका हकवाला तथा परिवारबाट उपेक्षित भई सामुदायिक घरमा बस्न चाहेमा सामुदायिक घरमा बस्ने व्यवस्था गराउनु, सार्वजनिक भौतिक संरचना (सरकारी भवन तथा कार्यालय) र सार्वजनिक यातायातका साधनमा अपाङ्गतामैत्री ह्वीलचियरसमेत जानसक्ने व्यवस्था गर्नु, अति अशक्त र वौद्धिक अपाङ्गता भएका व्यक्तिहरूलाई दैनिक जीवन गुजारा गर्न पुग्ने अनिवार्य बेरोजगार भत्ताको व्यवस्था गरी रोजगारी गर्नसक्नेलाई उनीहरूको अवस्था सुहाँउदो उत्पादनशील तालिम तथा रोजगारको व्यवस्था गर्नु, विभिन्न किसिमका प्राकृतिक विपत्ति आइपर्दा राज्यले अपाङ्गता क्षेत्रमा पनि अति अशक्त र वौद्धिक अपाङ्गताहरूलाई कसरी वचाउने भन्ने विशेष किसिमको नीति तयार गरी लागू गर्नु, अति अशक्त र वौद्धिक अपाङ्गता भएका व्यक्तिहरूको शारीरिक अवस्था अनुकूलको औपचारिक र अनौपचारिक व्यवहारिक शिक्षाको व्यवस्था गर्नु, अति अशक्त र वौद्धिक अपाङ्गता भएका व्यक्तिहरूको लागि सामुदायिक आवासीय भवन निर्माण गरी अति अशक्त र वौद्धिक अपाङ्गता भएका व्यक्तिको पुनःस्थापित नभएसम्मको लागि निजहरूलाई दैनिकरूपमा जीवन यापन गर्नपुग्ने अपाङ्गता भत्ता र एकजना सहयोगी राख्ने व्यवस्था गरी निजलाई समेत तलब भत्ता दिने व्यवस्था गर्नु, अति अशक्त र बौद्धिक अपाङ्गता भएका व्यक्तिहरू तथा समग्र अपाङ्ग व्यक्तिहरूको हक संरक्षण गर्नका लागि नेपालको अन्तरिम संविधान, २०६३ तथा अपाङ्गता भएका व्यक्तिहरूको हक संरक्षणसम्बन्धी माथि उल्लिखित सन्धि-सम्झौताबमोजिम कानुन निर्माण गर्नु र हाल भइरहेका अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ तथा नियमावली, २०५१ महासन्धिको मर्म अनुसार पुनर्लेखन गरी लागू गर्नु गराउनु भनी प्रत्यक्षीहरूका नाममा परमादेशसमेत जारी गरी पाउँ भन्ने रिट निवेदन माग दाबी।

यसमा के कसो भएको हो ? निवेदकको मागबमोजिमको आदेश किन जारी हुन नपर्ने हो ? यो आदेश प्राप्त भएका मितिले बाटाका म्यादबाहेक १५ दिनभित्र सम्बन्धित मिसिल साथै राखी महान्यायाधिवक्ताको कार्यालयमार्फत लिखित जवाफ

पठाउनु भनी रिट निवेदनको एकप्रति नक्कल साथै राखी विपक्षीहरूलाई सूचना पठाई त्यसको वोधार्थ महान्यायाधिवक्ताको कार्यालयमा पठाई लिखित जवाफ प्राप्त भए वा अवधि नाघेपछि नियमानुसार पेश गर्नु। साथै विषयवबस्तुको संवेदनशीलतालाई हेर्दा प्रस्तुत मुद्दालाई अग्राधिकार दिई पेशीमा चढाउनु भन्ने यस अदालत एक न्यायाधीशको इजलासबाट २०६८/५/१८ मा भएको आदेश।

हालै गरिएको राष्ट्रिय जनगणना- २०६८ बाट प्रत्येक परिवारमा रहेका अपाङ्गता भएका व्यक्तिहरूको विवरण लिने कार्य केन्द्रीय तथ्याङ्क विभागबाट सम्पन्न भई उक्त तथ्याङ्कको प्रशोधन तथा विश्लेषण कार्य भइरहेको हुँदा सो कार्य पूरा भएपछि नेपालभर रहेका अपाङ्गता भएका व्यक्तिहरूको संख्या यकिन हुनेनै छ।

अपाङ्गता भएका व्यक्तिको सम्बन्धमा त्रि-वर्षीय योजना (२०६७/०६८-२०६९/०७१) मा नेपाल सरकारले लिने रणनीति, कार्यनीति र प्रमुख कार्यक्रमहरू लगायतका सम्बन्धमा उल्लेख गरिएको छ। जुन यस आयोगले प्रकाशित गरेको त्रिवर्षीय योजना पुस्तकको पेज नं. २८५ देखि २८८ सम्ममा रहेको छ। त्रि-वर्षीय योजनामा उल्लेख गरिए अनुरूप सम्बन्धित निकायबाट काम कारवाही हुनेगरी अपाङ्गता भएका व्यक्तिहरूलाई मुलधारमा राखी योजनासमेत तयार गरिएको हुँदा रिट निवेदन खारेजभागी छ भन्ने राष्ट्रिय योजना आयोगको तर्फबाट यस अदालतमा परेको लिखित जवाफ।

शिक्षा मन्त्रालयबाट प्रशासन हुने शिक्षा नियमावली, २०५९ को परिच्छेद ११ अन्तर्गत नियम ६१-६६ सम्म विषेश शिक्षासम्बन्धी व्यवस्था अन्तर्गत अपाङ्गता भएका व्यक्तिहरूलाई विषेश व्यवहार गर्ने कुरालाई आत्मसात गरिएको छ। यो मन्त्रालय अपाङ्गता भएका व्यक्तिहरूका हकमा संवेदनशील रहेको र विपक्षी निवेदकले यो निवेदनपत्रको प्रकरण १० ङ मा दाबी गरे जस्तो अति अशक्त र वौद्धिक अपाङ्गता भएका व्यक्तिहरूको शारीरिक अवस्था अनुकूलको औपचारिक र अनौपचारिक व्यावहारिक शिक्षा व्यवस्था गर्नेतर्फ आगामी दिनहरूमा आवश्यक व्यवस्था गरिनेछ। अन्य सार्वजनिक सेवा जस्तै शिक्षा सेवामा पनि अपाङ्गता भएका व्यक्तिहरूलाई निश्चित प्रतिशत आरक्षणको व्यवस्था हालै गरिएको शिक्षक सेवा आयोग नियमावली, २०६७ द्वारा गरिएको छ। मन्त्रालय विपक्षी निवेदकको चासोप्रति सजग रहेकोले विपक्षीको दावीबाट फुर्सद पाउन अनुरोध छ भन्नेसमेत विपक्षी शिक्षा मन्त्रालयबाट यस अदालतमा पेश भएको लिखित जवाफ।

अपाङ्गता भएका व्यक्तिहरूको हक अधिकारको संरक्षण र संवर्धन गर्न यस मन्त्रालय सदैब प्रयत्नशील रहेको छ। जिल्ला विकास समिति अनुदान सञ्चालन कार्यविधि, २०६७, नगरपालिका अनुदान सञ्चालन कार्यविधि, २०६७ र गाउँ विकास अनुदान सञ्चालन कार्यविधि, २०६७ मा जिल्ला विकास समिति, नगरपालिका र गाउँ विकास समितिको कोषको कूल पुँजीगत बजेटबाट लक्षित समूह एवं क्षेत्र तथा नेपाल सरकारले सूचना प्रकाशित गरी लक्षित समूह भनी तोकेको वर्ग एवं समुदायले प्रत्यक्ष फाइदा पाउने कार्यक्रम र आयोजनाहरूमा लगानी गर्नका लागि न्यूनतम पन्ध्र प्रतिशत बजेट विनियोजन गर्नुपर्ने व्यवस्था गरी कार्यान्वयन गर्दै आइरहेको छ। स्थानीय स्वायत्त शासन ऐनमा भएको कानूनी व्यवस्थाबमोजिम स्थानीय निकायले अपाङ्गता भएका व्यक्तिहरूको व्यक्तिगत घटना दर्ता गर्ने, त्यसको दर्ता प्रमाणपत्र दिने, अपाङ्ग भत्तालगायतका सामाजिक सुरक्षा भत्ता वितरण गर्ने इत्यादि कार्यहरू गर्दै आइरहेको छ। त्यसैगरी स्थानीय निकायहरूबाट अपाङ्गता भएका व्यक्तिहरूको लागि सामुदायिक भवन निर्माणको कार्य भइरहेको र तिनीहरूको क्षमता अभिवृद्धिका लागि सीपमूलक तालिम, सचेतनासम्बन्धी गोष्ठी, सेमिनार इत्यादि लगायतका धेरै कार्यहरू सम्पादन हुँदै आइरहेको छ। निवेदनमा उल्लेखित कार्यकारिणीको अधिकारक्षेत्र भित्रको विषयलाई न्यायिक निरूपणको विषय बनाउन शक्तिपृथक्कीकरणको सिद्धान्तसमेतका आधारमा मिल्दैन भन्नेसमेत स्थानीय विकास मन्त्रालयको तर्फबाट यस अदालतमा परेको लिखित जवाफ।

महिला, बालबालिका तथा समाज कल्याण मन्त्रालय आफ्नो स्थापनाकालदेखि नै आफ्नो स्रोत साधनले भ्याएसम्म महिला, बालबालिकाको हक, हित एवं कल्याणको क्षेत्रमा सतत प्रयत्नशील रहँदै आएको छ भन्नेसमेत विपक्षी महिला, बालबालिका तथा समाज कल्याण मन्त्रालयका तर्फबाट यस अदालतमा परेको लिखित जवाफ।

विपक्षीले नेपाल पक्ष भएका सन्धि, सम्झौता अनुकुल कानुन बनाई लागू गर्नु भनी जिकीर लिनुभएको सम्बन्धमा के-कस्तो कानुन बनाउने, संशोधन गर्ने वा खारेज गर्ने भन्ने विषय व्यवस्थापिका संसद्को क्षेत्राधिकारभित्र पर्ने विषय भएकोले असम्बन्धित विषयमा

यस मन्त्रालयसमेतलाई विपक्षी बनाई दिएको रिट निवेदन खारेजभागी छ। आर्थिक वर्ष २०६८/०६९ को बजेट वक्तव्यमार्फत अपाङ्गता भएका व्यक्तिहरूले प्रयोग गर्न मिल्ने गरी बनाइएका १५० सी.सी.सम्मका स्कुटरमा सवारी साधन कर र सडक निर्माण तथा संभार दस्तुर नलाग्ने व्यवस्था गरिएको छ। साथै यस्ता व्यक्तिहरूको हक-हित तथा सुविधाको लागि राज्यले आफ्नो क्षेत्र र साधनले भ्याएसम्म भविष्यमा पनि विभिन्न कार्यक्रम ल्याई उनीहरूलाई सुविधा प्रदान गर्न सदा तत्पर नै रहने हुँदा विपक्षीले लिएको जिकिर खारेज गरी पाऊँ भन्ने अर्थ मन्त्रालयको तर्फबाट यस अदालतमा पेश भएको लिखित जबाफ।

अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९, अपाङ्ग संरक्षण तथा कल्याण नियमावली, २०५१ र नेपाल पक्ष रहेको Convention on the Rights of Persons with Disabilities र Optional Protocol to the Convention on the Rights of Persons with Disabilities, 2006 को अक्षरशः कार्यान्वयन हुनुपर्ने भन्ने निवेदकको दावी र भावनासँग यस सचिवालयको पूर्ण सहमति छ। Convention on the Rights of Persons with Disabilities र Optional Protocol to the Convention on the Rights of Persons with Disabilities, 2006 को मर्म अनुसार अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९, अपाङ्ग संरक्षण तथा कल्याण नियमावली, २०५१ को पुनर्लेखन गर्नुपर्ने भन्ने निवेदकको दावी सम्बन्धमा नेपालले अनुमोदन गरेको कुनै अन्तर्राष्ट्रिय महासन्धिसँग नेपाल कानून बाझिएको अवस्थामा बाझिएको हदसम्म महासन्धिको व्यवस्था नेपाल कानूनसरह लागू हुने र नेपाल कानूनको व्यवस्था अमान्य हुने व्यवस्था नेपाल सन्धि ऐन, २०४७ को दफा ९ (१) मा रहेकोले उक्त महासन्धि कार्यान्वयनमा कुनै अवरोध रहेको देखिँदैन। साथै कुनै नियमको व्यवस्थालाई संशोधन गर्नुपरेमा जुन निकायले निर्माण गरेको नियम हो सोही निकायले संशोधन गरी परिमार्जन गर्न सक्दछ। नेपाल ऐनको संशोधन गरी परिमार्जन गर्नुपरेमा नेपाल सरकार वा व्यवस्थापिका-संसद्को कुनै सदस्यले यससम्बन्धी विधेयक व्यवस्थापिका-संसद्समक्ष प्रस्तुत गर्नुपर्ने हुन्छ। नेपालको अन्तरिम संविधान, २०६३ ले व्यवस्थापिका-संसद् तथा सचिवालयलाई कुनै विधेयकको मस्यौदा गरी सदनमा लैजाने अधिकार प्रदान नगरेको हुँदा अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ परिमार्जन भएन भनेर यस सचिवालयलाई विपक्षी बनाई रिट दायर गर्नुको कुनै औचित्य नहुँदा यस सचिवालयको हकमा प्रस्तुत रिट निवेदन खारेज गरिपाऊँ भन्ने व्यवस्थापिका संसद् सचिवालयका तर्फबाट यस अदालतमा प्रस्तुत भएको लिखित जवाफ।

नेपालको अन्तरिम संविधान, २०६३ मा व्यवस्थित मौलिक हकहरू अपाङ्गता भएका नागरिकहरूलाई समेत समानरूपमा प्रचलनको सुनिश्चितता प्रदान गर्ने, गराउने कुरामा नेपाल सरकार प्रतिवद्ध रहेको छ। यसै प्रयोजनको लागि अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ तथा नियमावली, २०५१ जारी गरिएका छन्। नेपाल सरकारले निजामती सेवालगायत सार्वजनिक सेवा, सुविधाको उपभोगमा अपाङ्गता भएका व्यक्तिहरूका लागि आरक्षण प्रदान गर्दै आएको छ। सम्मानित अदालतबाट रिट नं. ३५८६ समेतका रिट निवेदनहरूमा निर्देशनात्मक एवं परमादेश जारी भएको सम्बन्धमा नेपाल सरकारबाट अन्धा, अपाङ्ग, बहिरा तथा सुस्तमनःस्थिति भएका व्यक्तिलाई सार्वजनिक विद्यालय, महाविद्यालय र तालिम केन्द्रमा निःशुल्क भर्ना लिई अन्य कुनै पनि किसिमको शुल्क नलिने व्यवस्था मिलाइएको छ। अस्पताललाई अपाङ्गमैत्री बनाउन विगत तीन वर्षदेखि र्‍याम्प निर्माण गर्ने, अपाङ्गहरूलाई अत्यावश्यक औषधि निःशुल्क वितरण गर्ने, अस्पतालहरूबाट अपाङ्ग, असहायको लागि विषेश छुट एवं निःशुल्क उपचारको व्यवस्था र अपाङ्ग असहायहरूको सेवाको लागि गैरसरकारी संस्थाहरूलाई अनुदान दिने कार्यहरू भइरहेको छ, ५ विकास क्षेत्रमा अपाङ्गतासम्बन्धी सूचना तथा सशक्तीकरण केन्द्र ज्भति म्भकप स्थापना र सञ्चालन गरिएको र दृष्टिबिहीनहरूका लागि सुन्ने पुस्तकालय स्थापना र सञ्चालन गरिएको छ। आ.व. २०६८/०६९ मा ७५ जिल्लामा अपाङ्गता भएका व्यक्तिहरूका लागि समुदायमा आधारित पुनअस्थापना कार्यक्रम, अपाङ्गता भएका व्यक्तिहरूका लागि सचेतनामूलक कार्यक्रम, ३ विकास क्षेत्रमा आवासीय संरक्षण तथा पुनःस्थापना केन्द्रको स्थापना तथा सञ्चालन, अपाङ्गता भएका व्यक्तिहरूका सहायक सामग्री उत्पादनका लागि साझेदारी कार्यक्रम र अपाङ्गता परिचयपत्र वितरण अभिलेख व्यवस्थापन कार्यक्रम सञ्चालन गरिएको भन्नेसमेत प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयको तर्फबाट यस अदालतमा परेको लिखित जबाफ।

यस मन्त्रालयबाट अपाङ्गता भएका व्यक्तिहरूलाई

राज्यको स्रोत साधनले भ्याएसम्म अस्पतालमा अपाङ्गमैत्री बनाउन विगत वर्षदेखि नै अस्पतालमा र्‍याम्प निर्माण गर्ने, अपाङ्गहरूलाई अत्यावश्यक औषधि निःशुल्क वितरण गर्ने, अस्पतालहरूबाट अपाङ्ग असहायको विशेष छूट एवं निःशुल्क उपचारको व्यवस्था र अपाङ्ग असहायहरूको सेवाको लागि गैरसरकारी संस्थाहरूलाई अनुदान दिने कार्य भइरहेको छ। यस मन्त्रालयबाट सम्मानपूर्वक बाँच्न पाउने हक जस्ता विपक्षी निवेदकहरूलाई प्रत्याभूत गरेको कुनै पनि मौलिक हक एवं संवैधानिक उपचारको हकमा आघात पुगेको छैन। रिट निवेदन खारेज गरिपाउँ भन्नेसमेत स्वास्थ्य तथा जनसंख्या मन्त्रालयका तर्फबाट यस अदालतमा परेको लिखित जवाफ।

नियमबमोजिम दैनिक पेशी सूचीमा चढी पेश हुन आएको प्रस्तुत रिट निवेदनसहितको मिसील अध्ययन गरियो। निवेदकका तर्फबाट उपस्थित रहनु भएका विद्वान अधिवक्ताहरू श्री सुदर्शन सुवेदी र श्री मेजर थापाले अपाङ्गतासम्बन्धी अन्तर्राष्ट्रिय महासन्धि, अपाङ्ग संरक्षण ऐन तथा नियमावलीसमेतले अपाङ्ग व्यक्तिहरूका लागि विभिन्न अधिकारको सुनिश्चितता गरेको छ। ती व्यवस्थालाई व्यावहारिक रूप दिएको छैन। सामान्य अपाङ्गका लागि केही व्यवस्था गरिएको भए पनि अति अशक्त व्यक्तिका लागि सरकारको तर्फबाट केही व्यवस्था हुनसकेको छैन। अपाङ्ग संरक्षण तथा कल्याण नियमावली, २०५१ को नियम ८ ले अति अपाङ्ग अशक्त व्यक्तिका लागि घरको व्यवस्था गरेको छ तर हालसम्म त्यस्तो घरको निर्माण गरिएको छैन। अपाङ्गमैत्री सडक एवं सरकारी भवनसमेतको व्यवस्था गरिएको छैन। यसको लागि सरकार, स्थानीय निकाय र नगरपालिकासमेतको दायित्व रहन्छ। त्यो पूरा गर्ने गरिएको छैन। मन्त्रिपरिषद् कार्यालयको लिखित जवाफमा भएका भनिएका कार्यहरू पर्याप्त छैनन्। अति अशक्त व्यक्तिको संरक्षक मरेपछि निजको संरक्षण कसले गर्ने भन्ने व्यवस्था गरिएको छैन। अपाङ्गको सामाजिक सुरक्षा, खानपिन, शिक्षा एवं हेरचाहको व्यवस्था पनि गरिनु पर्ने हुँदा निवेदन मागबमोजिम आदेश जारी गरिपाउँ भन्नेसमेत बहस प्रस्तुत गर्नुभयो।

विपक्षी नेपाल सरकारको तर्फबाट उपस्थित रहनु भएका विद्वान सह-न्यायाधिवक्ता श्री धर्मराज पौडेलले अपाङ्ग व्यक्तिका सम्बन्धमा धेरै कल्याणकारी कार्यहरू सरकारीस्तरबाट भएको कुरा प्रधानमन्त्री कार्यालयको लिखित जवाफमा उल्लेख गरिएकै छ। समाज कल्याण मन्त्रालयबाट अपाङ्गको परिभाषा गर्नुका साथै अपाङ्गताको निर्धारण गरिएको छ। नेपालको अन्तरिम संविधानमा द्वन्द्वकालमा अपाङ्ग भएका मानिसहरूको राहतको व्यवस्था गरिएको छ। चालू त्रिवर्षीय योजनामा पनि अपाङ्गता कल्याणको सम्बन्धमा योजनाहरू कार्यान्वयनमा रहेका छन्। अस्पताल एवं सरकारी कार्यालयहरूलाई अपाङ्गमैत्री बनाउने व्यवस्थाको शुरूवात गरिएको छ। बोल्ने सफ्टवेयर डेजसमेतको निर्माण गरिएको छ। हाल व्यवस्थापिकासंसद् नभएको कारण महासन्धि अनुरूप अपाङ्ग कल्याण ऐन पुनर्लेखन गर्न सम्भव छैन। अपाङ्ग घर निर्माणलगायतका कार्यका लागि राज्यले आफ्नो क्षमता अनुसार गर्ने भएकोले रिट निवेदन खारेज गरिपाउँ भन्नेसमेत बहस प्रस्तुत गर्नुभयो।

यसमा निवेदन माग दाबी हेर्दा निवेदकहरू नेपाल अपाङ्ग मानव अधिकार केन्द्र र अति अशक्त अपाङ्ग दीपेन्द्र शाक्यले अपाङ्गहरूको हकहित र राज्यभित्र बसोवास गर्ने हरेक नागरिकहरूले विनाभेदभाव राज्यबाट प्रदत्त अधिकारहरू सहजरूपमा उपभोग गर्न पाउनु पर्दछ। Convention on the Rights of Persons with Disabilities र Optional Protocol to the Convention on the Rights of Persons with Disabilities, 2006 लाई नेपाल सरकारले अनुमोदन गरी लागू गरिसकेको अवस्थामा अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ तथा अपाङ्ग संरक्षण तथा कल्याण नियमावली, २०५१ अपूर्ण भएको र लागू भए पनि कार्यान्वयन निस्क्रिय रहेको छ। अपाङ्ग संरक्षण तथा कल्याण नियमावली, २०५१ को नियम ८ ले अपाङ्ग घरको स्थापना र सञ्चालन गरिने व्यवस्था भए पनि त्यसरी घरसमेत सञ्चालन हुनसकेको छैन। यसबाट संविधानको धारा १२ (१) द्वारा प्रदत्त बाँच्न पाउने हक, धारा १३ ले प्रदत्त समानता र संरक्षणसमेतको हकबाट अपाङ्गहरू बञ्चित भएका छन्। तसर्थ, अति अशक्त र बौद्धिक अपाङ्गता भएका व्यक्तिहरूका लागि सामुदायिक आवासीय भवन निर्माण गर्ने, सार्वजनिक भौतिक संरचना र यातायातका साधनहरूमा ह्वीलचियरसमेत जान सक्नेगरी निर्माण गर्ने, बेरोजगार भत्ता, प्राकृतिक विपित्त आइपर्दा राज्यले अपाङ्गहरूलाई बचाउने नीति तयार गर्ने, व्यावहारिक शिक्षा लागू गर्ने र अपाङ्गतासम्बन्धी अन्तर्राष्ट्रिय महासन्धि अनुरूप अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ एवं नियमावली, २०५१ पुनर्लेखन गर्नु भनी आदेश जारी गरिपाउँ भन्नेसमेत निवेदन

मागदाबी लिएको देखियो।

यस अदालतबाट जारी भएको विभिन्न निर्देशनात्मक आदेशसमेतको परिप्रेक्ष्यमा अस्पताललाई अपाङ्गमैत्री बनाउन विगतदेखि र्‍याम्प निर्माण गर्ने, अपाङ्गहरूलाई आवश्यक औषधि निःशुल्क वितरण गर्ने, अस्पतालहरूबाट अपाङ्ग असहायको लागि विशेष छूट एवं निःशुल्क उपचारको व्यवस्था र अपाङ्ग असहायहरूको सेवाको लागि गैरसरकारी संस्थाहरूलाई अनुदान दिने कार्य भइरहेको भन्नेसमेत विपक्षी प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयसमेतबाट प्रस्तुत भएको लिखित जवाफबाट देखिन आउँछ।

माथि उल्लेखित रिट निवेदन मागदावी, विपक्षीको लिखित जवाफ र विद्वान कानून व्यावसायीहरूले गर्नुभएको बहस जिकीरसमेत सुनी हेर्दा निवेदकहरूको मागदाबी बुँदागतरूपमा निम्नानुसार रहेको देखिन्छ–

१. अपाङ्ग तथा बौद्धिक अपाङ्गतासमेत भएका व्यक्तिलाई राज्यले दैनिक भत्ता र विशेष सुविधा दिनुपर्ने।
२. अति अशक्त अपाङ्गहरूको लागि आवासीय घरको निर्माण गरी सञ्चालन गर्नुपर्ने।
३. प्रचलित ऐन, नियम प्रभावकारी ढंगले लागू गर्नुपर्ने र
४. अपाङ्गसम्बन्धी अन्तर्राष्ट्रिय सन्धि सम्झौतानुसार नेपालको ऐन, नियम अद्यावधिक गर्न संशोधन वा पुनर्लेखन गरी लागू गर्नुपर्ने।

निवेदकहरूको उक्त मागदाबीलाई ध्यानमा राख्दै निम्न प्रश्नको निरोपण गर्दै निर्णय गर्नुपर्ने देखियो।

१. अपाङ्गलाई भत्ता र विशेष सुविधा दिनु पर्ने एवं अति अशक्तका लागि आवासीय घर निर्माण गरी सञ्चालन गर्न परमादेश जारी गर्नुपर्ने हो, होइन ?
२. प्रचलित कानूनी व्यवस्था र यसको कार्यान्वयन प्रभावकारी छ, छैन ?
३. निवेदकहरूको मागदाबीलाई दृष्टिगत गर्दै के, कस्तो आदेश जारी गर्नु पर्ने हो ?

सर्वप्रथम पहिलो प्रश्नको सम्बन्ध विचार गर्दा, नेपालको अन्तरिम संविधान, २०६३ को धारा १२ (१) ले प्रत्येक व्यक्तिलाई सम्मानपूर्वक बाँच्न पाउने अधिकारको सुनिश्चितता गरेको छ। यस अधिकारको प्रचलनको लागि आधारभूत मानवीय आवश्यकताको परिपूर्तिका साथै सम्मानजनक ढङ्गले बाँच्नका लागि थप आवश्यक भौतिक सुविधा चाहिने हुन्छ। राज्यद्वारा त्यसको सुनिश्चितता गरिनु पर्ने कुरामा दुईमत रहँदैन। संविधानको धारा १३ ले सबै नागरिकलाई समानताको हक प्रदान गरेको छ। यसबाट जस्तोसुकै शारीरिक वा सामाजिक हैसियत र अवस्थाका भए पनि नागरिकहरू समान छन् र मानिस–मानिसबीच विभेदको अवस्था रहनु हुँदैन भन्ने मान्यतालाई आत्मसात गरिएको छ। सोही धारा १३ (३) को प्रतिबन्धात्मक वाक्यांशमा "तर महिला, दलित, आदिवासी, जनजाति, मधेशी वा किसान, मजदुर वा आर्थिक, सामाजिक वा सांस्कृतिक दृष्टिले पिछडिएको वर्ग वा बालक, वृद्ध तथा अपाङ्ग वा शारीरिकरूपले अशक्त व्यक्तिको संरक्षण, सशक्तीकरण वा विकासको लागि कानूनद्वारा विशेष व्यवस्था गर्न रोक लगाएको मानिने छैन" भन्नेसमेत संवैधानिक व्यवस्था रहेको देखिन्छ। सोही संविधानको धारा १८ ले प्रत्येक नागरिकलाई रोजगारी तथा सामाजिक सुरक्षाको हक प्रत्याभूत गरेको छ र धारा १८ (२) मा महिला, श्रमिक, वृद्ध, अपाङ्ग तथा अशक्त र असहाय नागरिकलाई कानूनमा व्यवस्था भएबमोजिम सामाजिक सुरक्षाको हक हुनेछ भन्ने विशेष संवैधानिक हकको प्रत्याभूति गरिएको पाइन्छ।

अन्तरिम संविधानमा व्यवस्थित राज्यको दायित्व अन्तर्गत धारा ३३ को खण्ड घ (१) ले मधेशी, दलित, आदिवासी, जनजाति, महिला, मजदुर, किसान, पिछडिएको वर्गका मानिसका साथै अपाङ्गलाई पनि मुलुकको राज्य संरचनाका सबै अङ्गहरूमा समानुपातिक आधारमा सहभागी गराउने कुरालाई राज्यले आफ्नो दायित्वको रूपमा स्वीकार गरेको छ। त्यसैगरी राज्यले अबलम्बन गर्ने नीति अन्तर्गत अरू कुराहरूका अतिरिक्त संविधानको धारा ३५ (९) मा "राज्यले एकल महिला, अनाथ, बालबालिका, असहाय, वृद्ध, अपाङ्ग, अशक्त र लोपोन्मुख जातिको संरक्षण र उन्नतिका लागि सामाजिक सुरक्षाको विशेष व्यवस्था गर्ने" भन्नेसमेत उल्लेख भएको देखिन्छ। यसका साथै धारा ३५ (१७) मा वृद्ध, अशक्त, महिला तथा बेरोजगारलाई कानूनमा व्यवस्था गरी भत्ता दिने नीति अवलम्बन गरिने कुरा पनि उल्लेख गरिएको छ। यी संवैधानिक व्यवस्थाले राज्यलाई अपाङ्गहरूको आधारभूत आवश्यकताको पूर्तिको अतिरिक्त सम्मानपूर्वक (तिनीहरूको) बाँच्न पाउने हकलाई सुनिश्चतता प्रदान गर्नका लागि विशेष व्यवस्था गर्नसमेत निर्देश गरेको पाइन्छ।

यस संवैधानिक व्यवस्थालाई व्यावहारिक रूप

प्रदान गर्न गरिएको प्रचलित कानूनी व्यवस्थातर्फ हेर्दा धेरै वर्षअगाडि बनेको अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ को दफा १० (१) मा "घरबास नभएका अपाङ्गलाई आफ्नो घरबास बनाउन वा कुनै अपाङ्गलाई कृषि व्यवसायमा लाग्न जग्गा चाहिएमा नेपाल सरकारले प्रचलित कानूनबमोजिम वितरण गरिने वा हाल-आवादी गर्न दिइने जग्गा तोकिएको शर्त बन्देजको अधीनमा रहने गरी उपलब्ध गराइदिन सकिनेछ" भनी अपाङ्गलाई सहुलियतको विशेष व्यवस्था गरेको पाइन्छ। सोही ऐनको दफा ११ मा अपाङ्गलाई परिवारका सदस्य, संरक्षक वा हकवालाले हेरविचार गरी पालनपोषण गर्नुपर्नेछ भन्ने व्यवस्था गरी परिवारका सदस्य वा आफन्तलाई विशेष कर्तव्य तोकेको पाइन्छ। यस ऐनलाई कार्यान्वयन गर्न बनेको अपाङ्ग संरक्षण र कल्याण नियमावली, २०५१ ले अरू कुराका अतिरिक्त नियम ८ मा "अपाङ्ग घरको स्थापना तथा सञ्चालनसम्बन्धी" व्यवस्था गरेको पाइन्छ।

यसका साथै स्थानीय स्वायत्त शासन ऐन, २०५५ को दफा २८ (१) को खण्ड (ट) को उपखण्ड (६) मा गा.वि.स. क्षेत्रभित्रमा असहाय, अनाथ र अपाङ्ग बालबालिकाहरूको लगत राख्ने र तिनीहरूलाई उपयुक्त ठाउँमा राख्ने व्यवस्था गर्ने भनिएको पाइन्छ भने दफा ९६ (१) को खण्ड (ञ) को उपखण्ड (१०) मा नगरपालिका क्षेत्रभित्र त्यस्तो अपाङ्गहरूलाई राख्ने व्यवस्था गरिने भन्ने र दफा १८९ (१) को खण्ड (च) को उपदफा (२) मा राष्ट्रिय नीति अनुरूप असहाय, महिला, वृद्ध, अपाङ्ग तथा अशक्तहरूको संरक्षणसम्बन्धी कार्य गर्ने भनी जिल्ला विकास समितिको कार्य तोकिएको पाइन्छ।

नेपाल सरकार पक्ष भएको Convention on the Rights of Persons with Disabilities को Article 28 ले प्रदान गरेको Adequate Standard of Living and Social Protection को अधिकार अन्तर्गत अपाङ्गता भएका व्यक्तिलाई "सार्वजनिक आवास कार्यक्रममा अपाङ्गता भएका व्यक्तिहरूको पहुँचलाई सुनिश्चित गर्ने" (To ensure Persons with disabilities to public housing programs) भनी उल्लेखसमेत भएबाट राज्यले सार्वजनिक आवास कार्यक्रम सञ्चालन गर्नुपर्ने र त्यसमार्फत अपाङ्गता भएका व्यक्तिको आवासको हक सुनिश्चित गर्नुपर्ने दायित्वलाई स्वीकार गरिएको पाइन्छ। यसलाई स्वीकार गर्दै नेपाल पनि यसको पक्ष भइसकेको स्थितिमा आफ्नो राष्ट्रिय कानूनी व्यवस्था (Domestic Legal Domain) अन्तर्गत व्यवहारमा परिणत गराउँदै यसको वास्तविक र प्रभावकारी कार्यान्वयनको व्यवस्था गर्नुपर्ने दायित्वबाट नेपाल र नेपाल सरकार पछि हट्नसक्ने स्थिति छैन।

अपाङ्गता भएका व्यक्तिहरू सवलाङ्ग व्यक्तिको तुलनामा विशेष हेरचाहको आवश्यकता पर्ने व्यक्तिहरूको समूह हो भन्नेमा विवाद छैन। यस यथार्थलाई दृष्टिगत गर्दै उनीहरूको विशेष शारीरिक र मानसिक अवस्था अनुसार राज्यद्वारा सार्वजनिकस्थलमा यिनीहरूको सम्पर्क र पहुँचको अभिवृद्धि गराउन र रोजगारी सुनिश्चित गराउन विशेष पूर्वाधारको व्यवस्था गर्नुपर्ने हुन्छ। त्यसैले पनि संविधानको धारा १३ (३) को प्रतिवन्धात्मक वाक्यांशमा सामान्य नागरिकभन्दा फरक विशेष समूहभित्र पर्ने अपाङ्गसमेतका व्यक्तिका लागि विशेष व्यवस्था गर्नसक्ने व्यवस्था गरिएको छ। अपाङ्गता प्राकृतिकरूपमा जन्मजात वा जन्मिसकेपछि अन्य विभिन्न कारणबाट हुनसक्ने विशेष शारीरिक, मानसिक वा वौद्धिक अवस्था हो। अपाङ्गताबाट व्यक्तिको शारीरिक, मानसिक वा वौद्धिक क्षमतामा ह्रास आउने भएको कारण अपाङ्गले अन्य सक्षम, सवलाङ्ग वा सामान्य मानिससरहको जीवनयापन गर्न कठिन हुन्छ। त्यसैले सामान्य मानिसभन्दा अपाङ्गहरूका लागि बढी र विशेष सुविधा एवं हेरचाहको आवश्यकता पर्दछ। यसकारण उनीहरूसँग रहेको शारीरिक क्षमता एवं मानसिक र वौद्धिक स्थितिको पहिचान गरी सामान्य मानिसमा भन्दा भिन्नरूपमा तिनीहरूसँग राज्यले व्यवहार गर्नु पर्दछ। उनीहरूलाई आफ्नो जीवनयापन गर्नसक्ने व्यवस्थाका लागि राज्यले आवश्यक भौतिक पूर्वाधारसहित विशेष कार्यक्रम सञ्चालन गरिनु उसको दायित्व अन्तर्गत पर्दछ। यसको लागि अपाङ्ग र अशक्त वा अति अशक्तको पहिचान गरी उनीहरूलाई जीवन निर्वाहका लागि निर्वाह भत्ता वा विशेष सुविधा सरकारले उपलब्ध गराउनु पर्ने भन्ने निवेदकहरूको मागदाबी अनुचित भन्ने देखिन आउँदैन।

प्रचलित संवैधानिक व्यवस्थाको कार्यान्वयनका लागि पनि यस्ता वर्गको संरक्षण र कल्याणको लागि राज्यले विशेष व्यवस्था गर्नु आवश्यक छ। अपाङ्गहरूमध्येमा पनि कोही सामान्य अपाङ्ग हुनसक्छन् भने कोही बढी वा अति अशक्त अपाङ्गहरू छन्, जसले खाना खानेदेखि आफ्नो नितान्त दैनिक क्रियाहरू गर्न पनि आफू सक्षम नभई अरूको सहारा सेवा वा हेरचाहमा भर पर्नु पर्ने अवस्था

रहेको हुन्छ। यस्ता अति अशक्त व्यक्तिहरूको सम्बन्धमा राज्यले उनीहरूको जीवनको अधिकार सुनिश्चित गर्न के गर्नुपर्दछ भन्ने कुराप्रति बढी गम्भीर हुनुपर्ने हुन्छ। अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ ले अपाङ्ग घरको परिकल्पना गरेको छ। सो ऐनको दफा २ को खण्ड (ग) मा "अपाङ्ग घर" भन्नाले असहाय अपाङ्गहरूलाई पालन पोषणसमेतको लागि व्यवस्था गरिएको घर सम्झनु पर्छ भनी परिभाषा गरेको छ। ऐनको दफा १० को उपदफा (८) ले वृद्ध-अपाङ्ग तथा असहाय अपाङ्गलाई बसोवासको लागि अपाङ्ग घरको व्यवस्था गर्न र सो घरमा मनोरञ्जन तथा समय सुविस्तासँग बिताउने साधनहरूको व्यवस्था गर्ने कुरा पनि उल्लेख गरेको छ।

सोही ऐन कार्यान्वयनका लागि १२ वर्षपछि बनेको अपाङ्ग संरक्षण तथा कल्याण नियमावली, २०५१ को नियम ८ ले पनि अपाङ्ग घरको स्थापना तथा सञ्चालनसम्बन्धी व्यवस्था गरेको छ। नियम ८ (१) ले आवश्यकतानुसार विभिन्न क्षेत्रमा नेपाल सरकारले अपाङ्ग घरको स्थापना गर्न सक्ने र सो स्थापना नभएसम्म अरू कुनै घरलाई अपाङ्ग घरको रूपमा उल्लेख गर्नसक्ने व्यवस्था गरेको छ। नियम ९, १०, ११ र १२ ले अपाङ्ग घर सञ्चालनसम्बन्धी अरू व्यवस्था गरेको छ। ऐनको दफा १० ले अपाङ्गहरूलाई समाजमा पुनःस्थापना, सामाजिक, सांस्कृतिक क्रियाकलापमा तिनीहरूको सहभागिता, रोजगारीको व्यवस्था एवं सो नभएसम्म बेकारी भत्ता, जीवनयापन भत्ता, कमाइ गरिखान नसक्ने वृद्ध र अपाङ्गलाई विशेष भत्ताको व्यवस्था पनि गरिएको पाइन्छ।

यसरी अपाङ्गहरूका लागि आवासीय घरको आवश्यकता छ भन्ने कुरालाई महसुस गरी सो स्थापना गर्ने र सञ्चालन गर्ने व्यवस्था उल्लिखित ऐन, नियमले गरेको पाइन्छ। शारीरिकरूपले वा मानसिकरूपमा अति अशक्त अपाङ्गलाई निजको पालन पोषण वा संरक्षण गर्ने परिवार छैन वा परिवार भए पनि उचित ढंगले पालन-पोषण गर्न नसकेमा वा सो गर्न सक्षम नभएमा वा पालन पोषण गर्न नचाहेको वा नगरेको वास्तविक स्थिति समेत विचार गर्दा अति अशक्तहरूका लागि आवश्यकतानुसार आवासीय अपाङ्ग घरको निर्माण गर्नु र तिनको उचित ढंगले सञ्चालन गर्नु एवं बेरोजगार वा गरिखान नसक्ने अपाङ्गलाई भत्ताको व्यवस्था गर्नु अत्यन्त आवश्यक छ। यस्तो स्थितिमा अपाङ्ग घरको निर्माण र सञ्चालन तथा विशेष सुविधा वा भत्ताका लागि गरिएको मागदाबी पनि उचित कानूनसम्मत एवं न्यायपूर्ण देखिन्छ।

अब दोस्रो प्रश्नको सन्दर्भमा विचार गर्दा नेपालको अन्तरिम संविधान, २०६३ ले अपाङ्ग, अशक्तहरूका लागि गर्नुपर्ने भनी निर्दिष्ट गरेको व्यवस्था र Convention on the Rights of Persons with DisabilitieS र Optional Protocol to the Convention on the Rights of Persons with Disabilities, 2006 लाई नेपाल सरकारले अनुमोदन गरी नेपाल पक्ष बनिसकेको अवस्थामा सो व्यवस्थालाई प्रभावकारी ढंगले कार्यान्वयन गर्न अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ र यस ऐन अन्तर्गत बनेको नियमावली, २०५१ समेतको व्यवस्था पूर्ण सक्षम एवं प्रभावकारी छन् भनी भन्नसकिने स्पष्ट आधार छैन। ऐन र नियमले अपाङ्गहरूका सम्बन्धमा सबै कुरा समेट्न सकेको छैन।

यसका साथै जे जति समेटिएको छ, त्यसको पनि ठीक उचित र प्रभावकारी ढंगले कार्यान्वयन भइरहेको पाइएको छैन। अपाङ्गताको निर्धारण गरिए पनि त्यो ठीक ढंगले विस्तृत (comprehensive) र वास्तविक आधारमा हुनसकेको छैन। अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ को दफा ४ ले लक्षित गरेको अपाङ्गको हित संरक्षण पूर्णरूपले हुनसकेको छैन। प्रधानमन्त्री कार्यालय र समाज कल्याण मन्त्रालयबाट प्राप्त लिखित जवाफहरू हेर्दा यस सम्बन्धमा केही प्रारम्भिक कार्यहरूको थालनीमात्र गरिएको पाइन्छ। तर गर्नु पर्ने धेरै महत्वपूर्ण कुराहरू हुनसकेका छैनन्। ऐन नियमले गर्नु पर्ने भनी व्यवस्था गरेको अपाङ्ग घरको स्थापना भएको छैन। केही गैर सरकारी संस्थाहरूलाई सो सम्बन्धमा दिइएको अनुदानबाहेक सरकारीस्तरबाट अपाङ्ग घरको न निर्माण भएको छ न त सञ्चालन भएको छ। अपाङ्गहरूको शिक्षा सम्बन्धमा पनि केही अत्यन्त प्रारम्भिक कार्यहरूमात्र भएको छ, जुन पर्याप्त छैन। त्यस्तै तालिम र रोजगारी तथा अपाङ्ग ऐनको दफा १० ले निर्दिष्ट गरेको सुविधा तथा सहुलियत पनि उचित र पर्याप्त किसिमले उपलब्ध गराइएको पाइँदैन।

प्रचलित ऐन नियमका अतिरिक्त अपाङ्गहरूको कल्याण र संरक्षणका सम्बन्धमा यस अदालतबाट यस अगाडि पनि विभिन्न रिट निवेदनहरूमा अपाङ्ग कल्याणका सम्बन्धमा निर्देशनात्मक आदेशहरू जारी भएका छन्। संविधानको धारा १३ (३) को प्रतिबन्धात्मक व्यवस्था कार्यान्वयनका लागि र सार्वजनिकस्थल एवं

अवसरमा अपाङ्गको सरल र सहज पहुँच हुन सक्नेगरी नीति र कार्यक्रम बनाउन (निवेदक विमला खड्कासमेत विरूद्ध प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय २०६५ को रिट नं. १७४८), अन्धा, अपाङ्गलाई निःशुल्क शिक्षा प्रदान गर्न (सुदर्शन सुवेदीसमेत वि. श्री ५ को सरकार मन्त्रिपरिषद् सचिवालयसमेत २०५७ सालको रिट निवेदन नं. ३५८६) मा र अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ को सेवा सुविधा प्रदान गर्न (निवेदक बाबुकृष्ण महर्जन वि. प्रधानमन्त्री तथा मन्त्रिपरिषद् कार्यालयसमेत भएको रिट निवेदन २०६१ सालको रिट नं. ३६६६) समेतका मुद्दामा यस अदालतबाट सो सम्बन्धी निर्देशनात्मक आदेशहरू भएका छन्।

यस अदालतबाट पहिला भएका आदेशहरू र यस रिट निवेदनमा विपक्षीहरूद्वारा प्रेषित लिखित जवाफसमेतको अध्ययन गरी हेर्दा वर्तमान कानूनी व्यवस्था आजको समयमा अपाङ्ग कल्याण र संरक्षणका लागि पर्याप्त भएको भन्ने निस्कर्षमा पुग्न कठिन छ। यसका अतिरिक्त भरइरहेको व्यवस्था पनि प्रभावकारी ढङ्गले लागू हुनसकेको पाइएको छैन।

ऐनको दफा २० अनुसार अपाङ्गसम्बन्धी प्रभावकारी, यथार्थपरक नीति र कार्यक्रमहरूको निर्माण भएको वा हुनेगरेको छैन। यसबाट समाजको यस कमजोर वर्गप्रति राज्यले पूरा गर्नुपर्ने दायित्व पूरा गरेको भन्न मिल्ने अवस्था देखिन आउँदैन। यस अवस्थामा सुधारका लागि र अपाङ्ग र अशक्तहरूको वास्तविक हित संरक्षणका लागि हाम्रो कानूनी व्यवस्थामा सुधार, परिर्वतन र परिमार्जनको आवश्यकता छ। यो महत्वपूर्ण कुरा हो। उचित र समय सुहाउँदो अद्यावधिक कानूनी व्यवस्थाले सरकार र सरकारी निकायहरूलाई यस दिशामा संवेदनशीलमात्र गराउने होइन, अपितु सो अनुसारको जिम्मेवारी पूरा गर्न वाध्य गराउन सक्नुपर्दछ। त्यसैले विद्यमान कानूनी व्यवस्थामा आजको परिस्थितिमा अपाङ्गको संरक्षण र कल्याणसम्बन्धी काम गर्न सरकार र सरकार सम्बद्ध अनेक निकायलाई बढी जिम्मेवार बनाउनका लागि यथोचित परिमार्जन गर्नुपर्ने देखिन्छ। सो नभएसम्म भइरहेका ऐन, नियमहरूको कार्यान्वयन प्रक्रियालाई बढी प्रभावकारी र परिणाममुखी बनाउँदै जानु आवश्यक छ।

अब निवेदकहरूको मागदाबीलाई दृष्टिगत गर्दै यस सन्दर्भमा के-कस्तो आदेश जारी गर्नु आवश्यक छ भन्ने तेस्रो प्रश्नतर्फ विचार गर्दा संविधान र ऐन नियममा गरिएको व्यवस्थाहरू व्यावहारिक हुनुपर्ने र यस्ता व्यवस्थाहरू कार्यान्वयनका लागि हुन् भन्नेमा विवाद छैन। तिनको प्रभावकारी कार्यान्वयनको ठोस उपाय एवं व्यवस्था गर्नु राज्यको र राज्य सञ्चालन गर्ने सरकार एवं सरकारी संयन्त्रको दायित्व हो। संविधानको भाग ४ मा लेखिएको राज्यको दायित्व, निर्देशक सिद्धान्त र राज्यका नीतिहरू पनि शोभाका लागि शाब्दिक आभूषणमात्र होइनन्। संविधान निर्माताले तिनको आवश्यकता महसुस गरेर वर्तमान परिवेशमा राज्यले क्रमशः व्यवहारमा परिणत गर्दै जाने उद्देश्यका साथ संविधानमा राखिएका हुन्। त्यसकारण भाग ४ को संवैधानिक व्यवस्थालाई पनि निष्क्रिय रूपले राखिरहनु संविधानको समष्टिगत व्यवस्था र संविधानको भावना (Constitutional Spirit) बमोजिम हुँदैन। तर यसका साथै संविधान, कानून र अन्तर्राष्ट्रिय सन्धि( सम्झौतामार्फत व्यक्त गरिएको प्रतिबद्धता व्यवहारमा परिणत गर्न सोही अनुरूपको अठोट, आचरण र भौतिक साधन, स्रोतको आवश्यकता पर्दछ। कुनै पनि अपाङ्गले संविधान, ऐन, कानून अनुसारको सुविधाबाट वञ्चित नहुनु र अन्तर्राष्ट्रिय प्रचलन एवं मापदण्ड अनुसारको सेवा सुविधा र हेरचाह प्राप्त गर्नु राष्ट्रिय गौरवको कुरा हो। यसलाई राज्यले र राज्यका सम्बद्ध प्रत्येक अङ्गले गम्भीरतापूर्वक लिनु पर्दछ। यो अत्यन्त संवेदनशील विषय हो। राज्य वा सरकारले तत्काल‍ै गर्नै नसक्ने प्रतिबद्धता व्यक्त गर्नु हुँदैन र अदालतले पनि त्यस्तो आदेश जारी गर्न मिल्दैन।

अदालत, संविधान र ऐन नियमको पूर्ण कार्यान्वयन गराउनेतर्फ प्रतिबद्ध र संवेदनशील रही आएको छ। कानूनले स्पष्ट किटानी गरेको कुराहरूका अतिरिक्त कानूनको उद्देश्य र संविधानको मर्म एवं भावनालाई पनि व्यावहारिक रूप दिने, दिलाउने काममा यो अदालत सदैव सक्रिय, अग्रसर र प्रयत्नशील रही आएको छ। तर राज्यको एक अङ्ग भएकोले एक्लो हिँड्नुभन्दा राज्यका अन्य अङ्गहरूसँगको समन्वयमा सामञ्जस्यतापूर्ण ढंगले अदालती काम कारबाही भएमा मात्र जनतालाई न्याय प्राप्त हुन्छ र राज्य सञ्चालन विधिपूर्वक सपन्न हुनसक्दछ। यसर्थ, यसतर्फ अदालत सदैव सजग रहँदै उचित न्यायिक संयम (Judicial restraint) को सिद्धान्तलाई पनि बेवास्ता गर्न मिल्दैन। यसको तात्पर्य यथास्थितिवादलाई जस्ताको तस्तै स्वीकार गर्नु वा अपाङ्गहरूको हकहितप्रति उदासिन हुनु वा न्यायिक

अग्रसरताको स्थानमा न्यायिक निस्क्रियताको बाटो अवलम्बन गर्नु भन्ने कदापि होइन। तर यस्तो स्थितिमा न्यायिक अग्रसरता र न्यायिक संयम दुवैलाई यथोचित ढङ्गले दृष्टिगत गर्नु र सन्तुलन राख्नु नै उपयोगी हुने कुरा निश्चित छ। अति न्यायिक अग्रसरता (Extreme Judicial Activism) वा अनावश्यक न्यायिक निष्क्रियताको हदसम्म न्यायिक आत्मसंयम (Judicial self restraint) अपनाउनु दुवैले जनताको न्याय प्राप्त गर्ने मार्गमा अवरोधको सिर्जना गर्नसक्ने खतरा प्रति निर्णयकर्ता सधैँ सजग र सावधान रहनु पर्दछ।

पर्याप्त अपाङ्ग घरको लागि भौतिक संरचना र तिनको सञ्चालन, प्रत्येक सरकारी एवं सार्वजनिक कार्यालय र सार्वजनिक यातायातका साधन र बाटोमा ह्विलचेयर र सोसमेत जानसक्ने छुट्टै मार्ग (Track) को व्यवस्था गर्नु पर्ने भनी रिट निवेदकले माग गरेको देखिन्छ। अति अशक्तहरूका लागि नियमित भत्ता र तिनको हेरचाह गर्ने व्यक्तिका लागि पनि निर्वाह भत्ताको माग पनि गरिएको छ। शिक्षा, स्वास्थ्य, रोजगारलगायतमा अपाङ्गहरूको पहुँचलगायतका माग गरिएको देखिन्छ। यी मागहरूका सम्बन्धमा विचार गर्दा यसका लागि पर्याप्त पूर्वाधारको विकास गर्न राज्यले आफ्नो स्रोत र साधनले भ्याएसम्म क्रमशः यी मागहरू सम्बोधन गर्दै सोही अनुरूपको नीति र कार्यक्रम बनाउँदै लागू गर्दै जानु पर्ने हुन्छ। यसका लागि ठूलो भौतिक साधन र स्रोतको आवश्यकता पर्ने भएकोले यस्ता कार्यका सम्बन्धमा यस अदालतबाट समयसीमाबद्धरूपमा निरपेक्षरूपले आदेश गर्दा त्यसको कार्यान्वयनसमेत सम्भव हुँदैन। भौतिक साधन र स्रोतको अनुपलब्धता पनि त्यसमा बाधक बन्नसक्ने हुन्छ। यसर्थ यी निवेदकहरूले यस रिट निवेदनमा माग गरे जस्ता व्यापक कार्यहरू तत्कालै गर्नु भनी आदेश जारी गर्नु विवेकसम्मत र उपयोगी हुनसक्ने अवस्था देखिँदैन।

यसरी समग्र परिस्थितिको गम्भीरतापूर्वक अध्ययन र समीक्षा गरी हेर्दा केही कुराहरू तत्कालै गर्नु आवश्यक देखिन्छ भने केही कुराहरू क्रमशः गर्दै जानु पर्ने देखिन्छ। नेपाल सरकार र यसका विभिन्न अङ्गहरूबाट अपाङ्गहरूको हक, हितका लागि शिक्षा, स्वास्थ्य एवं सामाजिक सुरक्षाको क्षेत्रमा केही कार्यहरूको थालनी हुनु उत्साहवर्द्धक कुरा हो। तर त्यो अत्यन्त न्यून र अपर्याप्त छन्। यसर्थ यसप्रति बढी गम्भीर र बढी जिम्मेवार भएर देहायका कार्यहरू गर्न भनी विपक्षी नेपाल सरकार प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय, महिला बालबालिका तथा समाजकल्याण मन्त्रालय र अर्थ मन्त्रालयको नाममा परमादेश जारी गरिएको छ।

## गर्नुपर्ने कार्यहरू

१. अहिलेसम्म पहिचान र गणना भइसकेका अपाङ्गहरूलाई अपाङ्गताको अवस्थाहेरी बेरोजगार र आयको स्रोत नभएका र वृद्ध अपाङ्गहरूलाई न्यूनतम मासिक रू. ५००/- र (पाँच सय) देखि रू. ३०००/- (तीन हजार) सम्म निर्वाह भत्ता दिने दिलाउने व्यवस्था गर्नुपर्ने,
२. पहिचान भई गणना भइसकेका शारीरिकरूपले हिँडडुलसमेत गर्न नसक्ने पूर्ण अशक्त वा पूर्णरूपले मानसिक विक्षिप्तताको अवस्थामा रहेको अति अपाङ्गलाई उचित हेरचाह गर्ने परिवार नभएका वा सो गर्न सक्षम परिवार नभएकालाई हेरचाह गर्ने व्यक्तिसमेतका लागि न्यूनतम निर्वाह भत्ताको रूपमा अवस्था अनुसार रू. ३०००/- (तीन हजार) देखि रू. ५०००/- (पाँच हजार) सम्म मासिक विशेष भत्ता उपलब्ध गराउने,
३. अपाङ्गहरूको पहिचान, वर्गीकरण र तिनीहरूको समग्र हकहितसमेत हेर्नेगरी प्रत्येक जिल्लामा कम्तीमा एक जना समाज कल्याण अधिकृतको नियुक्ति गर्ने वा निजको काम गर्नेगरी नेपाल सरकारको कुनै अधिकृतलाई तोक्नुपर्ने,
४. उपरोक्त दफा १ र २ अनुसारको भत्ता र विशेष भत्ता यो आदेश प्राप्त भएको मितिदेखि लागू हुनेगरी आदेश प्राप्त भएको मितिले तीन महिनाभित्र उपलब्ध गराउनु पर्ने,
५. यो आदेश प्राप्त भएको मितिले ६ महिनाभित्र समाज कल्याण अधिकृत नियुक्त गरिसक्नु पर्ने,
६. उपरोक्तबमोजिमको कार्यहरू सम्पन्न गरी यो आदेश प्राप्त भएको सातौँ महिनाभित्र आदेश कार्यान्वयन भएको जानकारी यस अदालतलाई गराउनु पर्ने।

उपरोक्त कार्यहरूको अतिरिक्त संविधानबमोजिम अपाङ्गका सम्बन्धमा गर्नु पर्ने अरू कल्याणकारी कार्यहरू राज्यका नीतिमा नै सिमित नरही कार्यान्वयनको प्रक्रियामा आउनु पर्छ। त्यस्ता कुराहरू ऐनमा विस्तृतरूपमा व्यवस्थित हुनुपर्छ। यसका अतिरिक्त अपाङ्ग हकहितको क्षेत्रमा देखापरेका नवीन चुनौतीहरूलाई समेत सम्बोधन गर्नु आवश्यक छ। शिक्षा, स्वास्थ्य र सामाजिक

सुरक्षासम्बन्धी विषयबस्तुलाई समावेश गरी अपाङ्ग ऐन र नियमावलीमा परिमार्जन वा पर्याप्त अध्ययनगरी अर्को एकीकृत ऐन जारी गर्नु पर्ने अवस्था रहेको छ। आजभन्दा तीन दशक पहिला बनेको ऐन र दुई दशक अगाडि बनेको नियमावलीले यस क्षेत्रका आवश्यक सबै कुराहरू एक त समेट्नसकेको छैन भने दोस्रो ती ऐन, नियमको प्रभावकारी कार्यान्वयन भइरहेको छैन।

तसर्थ माथि विवेचना गरिएका संविधान, ऐन, नियम र महासन्धिसमेतलाई दृष्टिगत गर्दा उचित समयसीमाभित्र निम्नबमोजिमका कार्यहरू क्रमशः गर्दै जान विपक्षीहरू नेपाल सरकार प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय र महिला, बालबालिका तथा समाज कल्याण मन्त्रालयका नाममा यो निर्देशनात्मक आदेश जारी गरिएको छ।

## निर्देशनात्मक आदेश जारी गरिएका विषयहरू

१. अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ को दफा ३ को प्रयोजनका लागि चिकित्साशास्त्रका सर्वमान्य सिद्धान्त र अन्तर्राष्ट्रिय मापदण्डसमेतको आधारमा शारीरिक, मानसिक र बौद्धिक अपाङ्गहरूको गणना गरी तिनीहरूको स्तर निर्धारण एवं वर्गीकरण यथाशिघ्र गर्ने, गराउने,

२. अपाङ्ग घरको निर्माण एवं सञ्चालन गर्ने। यसको लागि आगामी आर्थिक वर्षदेखि नै अपाङ्गको सत्याको आधारमा बढी अपाङ्ग भएको जिल्ला वा क्षेत्रमा योजनावद्ध ढङ्गले प्रत्येक वर्ष कम्तीमा एक अपाङ्ग घरको निर्माण र सञ्चालन गर्दै जानुपर्ने,

३. ऐन र नियमले अपाङ्गहरूको आवास, शिक्षा, स्वास्थ्य, तालिम, रोजगारी र अन्य सुविधाको सम्बन्धमा गरेको व्यवस्थालाई प्रभावकारी ढङ्गले लागू गर्दै जाने,

४. अपाङ्ग कल्याण र सुरक्षासम्बन्धी सरकारी र गैरसरकारीस्तरबाट गरिने क्रियाकलाप र गतिविधिको प्रभावकारी अनुगमन गर्ने गराउने उद्देश्यले मन्त्रिपरिषद् सचिवालयमा र महिला, बालबालिका तथा समाज कल्याण मन्त्रालयमा अधिकृतस्तरको एकएक अनुगमन अधिकारी नियुक्त गर्ने र तिनीहरूको काम, कर्तव्य र अधिकार पनि परिमार्जित अपाङ्ग संरक्षण तथा कल्याण ऐनमा निर्धारण गर्ने,

५. नेपालको अन्तरिम संविधान, २०६३ को धारा १३ (३) को प्रतिबन्धात्मक खण्ड र संविधानको भाग ४ मा राज्यको दायित्व र राज्यका नीति उल्लेख गरिए अनुसार अपाङ्गहरूका लागि विशेष व्यवस्था र कार्यक्रमको तर्जुमा गरी लागू गर्दै जानु पर्ने,

६. अपाङ्गता अधिकार र अपाङ्ग कल्याणको क्षेत्रमा कार्यरत सरकारी र गैरसरकारी निकायहरूको काम कारबाहीमा आवश्यकतानुसार समन्वय र सहयोगको व्यवस्था मिलाउने,

७. नेपालले अपाङ्गतासम्बन्धी महासन्धि, २०१६ अनुमोदन गरिसकेको अवस्थासमेतलाई विचारगरी यस क्षेत्रका विशेषज्ञ र सरोकारवालाहरू समेतसँग आवश्यक परामर्श एवं सुझाव लिई अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ र नियमावली, २०५१ मा समयानुकूल संशोधन र परिमार्जन गर्ने वा नयाँ एकीकृत ऐन र सोही अनुरूपको एकीकृत नियमावली निर्माण गर्नु पर्ने।

यो आदेशको जानकारी महान्यायाधिवक्ताको कार्यालयमार्फत विपक्षीहरूलाई र एक प्रति फैसलासहितको जानकारी यस अदालत अनुगमन तथा निरीक्षण महाशाखालाई समेत दिई दायरीको लगतकट्टा गरी मिसिल नियमानुसार बुझाइदिनू।

....

न्यायाधीश

उक्त रायमा म सहमत छु।

...

न्यायाधीश

इजलाश अधिकृत : चुरामन खड्का

कम्प्युटर गर्ने :- सरस्वती पौडैल

इति संवत् २०६९ साल श्रावण ३१ गते रोज ३

शुभम् ...

# सूचना ! सूचना !! सूचना !!!

## संस्था आबद्धताका लागि सार्वजनिक सूचना जारी गरिएको सम्बन्धमा ।

संस्था दर्ता ऐन, २०३४ अनुसार दर्ता भई समाज कल्याण परिषद्मा आबद्ध अपाङ्गता भएका व्यक्तिहरूले स्थापना गरेका राष्ट्रिय अपाङ्ग महासंघ-नेपालमा आबद्ध हुन इच्छुक "अपाङ्गता भएका व्यक्तिहरूले नेतृत्व गरेका संस्थाहरूलाई २०७१ भाद्र १५ गतेसम्म आबद्धताका लागि निम्न कागजातहरू पूरा गरी संस्थाको लेटरप्याडमा अनुरोध गरी आवेदन दर्ता गर्न आह्वान गर्दै यो सार्वजनिक सूचना जारी गरिएको छ" ।

**आबद्धताका लागि चाहिने आवश्यक कागजात :**

१. संस्थाको विधान ।
२. चालू आर्थिक वर्षको जिल्ला प्रशासन कार्यालयमा नवीकरण गरेको प्रमाणपत्रको प्रतिलिपि ।
३. २१ जनाभन्दा बढी साधारण सदस्यको नामावली ।
४. समाज कल्याण परिषद्को दर्ता प्रमाणपत्र प्रतिलिपि ।
५. दुई आर्थिक वर्षको अडिट रिपोर्ट र प्रगति प्रतिवेदनको प्रतिलिपि ।
६. राष्ट्रिय अपाङ्ग महासंघमा आबद्धताका लागि बसेको कार्यसमिति बैठकको माइन्युटको प्रतिलिपि ।
७. कार्यसमितिको अपाङ्गताको प्रकार, नामावली, मोबाइल नम्बर र पत्राचार गर्ने स्पष्ट ठेगाना ।
८. कार्यसमितिहरूको अपाङ्गता प्रमाणपत्रको प्रतिलिपि ।
९. संस्थाको लेटरप्याडमा छापसहितको आबद्धताका लागि लेखेको निवेदन ।

**(सुदर्शन सुवेदी)**
**अध्यक्ष**
**राष्ट्रिय अपाङ्ग महासंघ नेपाल**

**(टीका दाहाल)**
**महासचिव**
**राष्ट्रिय अपाङ्ग महासंघ नेपाल**

